जन आस्था साप्ताहिक

JANA AASTHA National Weekly

www.janaaastha.com

वर्ष २९, अंक २९, २०८० साल असोज ३ गते बुधबार, नेपाल संबत् ११४३, September 20, 2023


# विदेशबाट समातेर ल्याउन यतिसम्म बाधा

अपराधको दुनियाँमा नेपालले लड्नु छ अजंगको पहाडविरुद्ध, हतियारचाहिँ भुत्ते ! अहिले सुन तस्करीले देश विश्व जगतमै बद्नाम हुँदा त्यससँग सम्बन्धित कसुरदार, प्रमाण र कागजात संकलनका क्रममा नेपाल प्रहरीले यस्तो भुक्तमान व्यहोर्नु परेको हो ।

सुरक्षा केन्द्रित अन्तर्देशीय सञ्जालभित्र छिर्न नेपाल प्रहरी र त्यसको केन्द्रीय अनुसन्धान व्युरो (सिआइबी) कमजोर हुनुको कारण हो, नेपालको परम्परागत प्रशासनिक कार्यशैली । प्रहरी आफैंसँग कुनै विदेशी मुलुकलाई पत्राचार गर्ने र सरोकारहरू सीधै राख्ने अधिकार छैन । थुप्रै देशसँग नेपालले पारस्परिक कानुनी सहायता (म्युचुअल लिगल असिस्टेन्स-एमएलए) सम्बन्धी सम्झौता गरेको छ । त्यसो गर्नुको मुख्य कारण सुरक्षा नै हो । तर, त्यसलाई प्रहरीले चाहेअनुसार उपयोग गर्न पाउँदैन । फलतः विभिन्न सामानभित्र लुकाएर त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलको भन्सार हुँदै छिराइएका सुनसम्बन्धी अनुसन्धान प्रभावित भएको छ । तस्करी भएको हो, त्यो गैरकानुनी काम हो र त्यसले भन्सार राजस्वमाथि गम्भीर आघात पुऱ्याएको छ भन्नेमा कुनै शंका छैन । तर, तिनै कुरालाई पुष्टि गर्न वा मुद्दा चलाउनका लागि आवश्यक पर्ने सबै कसुरदार, कागजात र प्रमाण स्वदेशभित्रै उपलब्ध छैनन् । भारत, हङकङ, ताइवान, दुबई, मलेसियासहित विभिन्न देशसँग यो अनुसन्धान सम्बन्धित छ । कतै अपराधी छन्, कतै प्रमाण जनिने कागजात वा विवरण । ती चिज ल्याउनका लागि प्रहरीले पहिला परराष्ट्र मन्त्रालयलाई पत्राचार गर्नुपर्ने हुन्छ । उसले सम्बन्धित देशस्थित नेपाली दूतावाससँग पत्राचार गर्छ र दूतावासले उक्त मुलुकको सरोकारवाला मन्त्रालय वा विभागसँग कुरा पुऱ्याउनुपर्छ । नेपालमा कुनै पनि मुद्दा शुरु भइसकेपछि त्यसको अनुसन्धान गर्ने हदम्याद २५ दिनको मात्रै हुन्छ । यदि एमएलएको विधिबाट कुनै कुरा विदेशबाट संकलन गर्नुपर्ने भयो भने त्यति दिन त देशकै लेखापढीका लागि पनि पर्याप्त हुँदैन वा गरिँदैन । मानौं, समयमै कागजात तयार भयो । फेरि समस्या छ, परराष्ट्रमा । त्यहाँको ठूलो समस्या हो, ढिलासुस्तीको । अर्को झमेला छ, विभिन्न देशप्रति मान्छेपिच्छेका फरक-फरक बुझाई । भारतसम्मको कुरामा त प्रहरीले व्यक्तिगत पहुँचका आधारमा, त्यताका स्थानीय प्रहरी युनिटसँग सहकार्य गर्दै मानिस पक्रेर ल्याउने गरेको छ । किनभने, भारतसम्मको भाषा बुझिन्छ, काम गर्ने तौरतरिका मिल्छ, कतिपय समस्या बडी ल्याङ्वेजबाटै हल हुन्छन् । तर, चीनतिर त्यस्तो गर्न सम्भव छैन । एक त कडा तथा अति संवेदनशील सुरक्षा व्यवस्था, अर्कातिर न भाषाको सहजता, न काम गर्ने तरिकामै एकरूपता । जस्तो कि, ब्रेक सुजभित्र लुकाएर भन्सारबाट पास भएको सुनको तस्करीसम्बन्धी अनुसन्धान गर्ने सिलसिलामा सिआइबीले एसएसपी दिनेश आचार्यलाई बाँकी ८ पेजमा

# सुवासलाई प्रधानमन्त्री बनाउने त्यो सूत्र

**'न रहे बाँस, न बाँसुरी' भनेझैं एकातिर दुई तिहाइको कम्युनिष्ट सरकार ढल्दै थियो, अर्कोतिर शक्तिशाली नेकपा विभाजनको संघारमा थियो । पार्टी एकता जोगिने सम्भावना लगभग सकिएको निश्कर्षमा नेता पुगिसकेका थिए । त्यसैबीच दोस्रो पुस्ताका केही नेताले केपी ओली, प्रचण्ड र माधव नेपालको विकल्पमा सुवास नेम्वाङलाई प्रधानमन्त्री बनाएर नेकपालाई विभाजनबाट बचाउने मध्यमार्गी प्रस्ताव अघि सारे । तर, त्यसलाई 'नेतृत्वविरुद्धको षड्यन्त्र' देख्नुभएका ओलीले प्रस्ताव ठाडै अस्वीकार गरेपछि पार्टी विभाजन रोक्ने उनीहरूको इमान्दार प्रयास काम लागेन ।**

दुई विपरीत धारका पार्टी एमाले र माओवादी केन्द्रको एकता नेपालको वाम आन्दोलनमा एउटा ऐतिहासिक परिघटना थियो । त्यो एकता कति महत्वपूर्ण थियो भने जनताले समेत चुनावमार्फत अनुमोदन गरेका थिए । त्यसैको बलमा आफूलाई दुई तिहाइ जनमतको नेतृत्व गर्ने दुर्लभ अवसर मिलेको तथ्य ओलीले स्वीकार गर्नुभएन । फलतः नेकपा त फुट्यो नै, साढे तीन वर्ष पुग्दा नपुग्दै उहाँ आफै बालुवाटारबाट बालकोट फर्कनुपऱ्यो । बाहिर जे-जे भनिए पनि नेकपा विभाजनको मूल कारण प्रधानमन्त्री पद नै थियो । ओलीले सार्वजनिकरूपमै प्रधानमन्त्री छोड्नुपरे 'कुर्सी भाँचिदिने' खुला च्यालेञ्ज गर्नुभएकै हो । आधा-आधा कार्यकाल प्रधानमन्त्री बाँड्ने आफैंले गरेको सहमतिप्रति उहाँ इमान्दार बनेको भए सम्भवतः पार्टी विभाजन हुँदैनथ्यो भन्नेहरू आज पनि एमालेभित्र धेरै छन् ।

०७८ पुस ५ गते ओलीले पहिलोचोटी प्रतिनिधिसभा भंग गरेपछि नेकपाको एउटा समूह सरकारमा हुँदा अर्को खेमा सडकमा पुग्यो । तथापि एकता जोगाउने प्रयास भने रोकिएको थिएन । पूर्वएमाले खेमाका सुरेन्द्र पाण्डे, घनश्याम भुसाल, पृथ्वीसुब्बा गुरुङ, शंकर पोखरेल, विष्णु पौडेललगायतका नेता जुनसुकै मूल्य चुकाएर भए पनि पार्टी फुट्न दिनुहुँदैन भन्ने लाइनमै थिए । त्यसका निम्ति प्रधानमन्त्रीमा ओलीको विकल्प खोज्न परे पनि तयार हुनुपर्ने तहमा छलफल अघि बढाइएको थियो । पार्टीमा सल्लाहै नगरी एकलौटी ढंगले असंवैधानिक कदम उठाएका ओलीलाई प्रचण्ड-माधवले प्रधानमन्त्री मान्ने अवस्था थिएन । आफ्नो सरकार ढाल्न षड्यन्त्र गरेको ठान्नुभएका ओलीले पनि प्रचण्ड-माधवलाई स्विकार्ने सम्भावना थिएन । त्यसपछि नै सुवासलाई प्रधानमन्त्री बनाउने प्रस्ताव अघि सारिएको हो ।

सुवासलाई प्रधानमन्त्री बनाउँदा पार्टी बाहिरको समेत समर्थन जुट्ने विश्वास नेतालाई थियो । नम्र बोली, शालीन व्यक्तित्व र समन्वयकारी भूमिका खेल्नसक्ने उहाँको विशेष क्षमताप्रति ओलीको खास भित्रिया भनिए पनि अर्को पक्षले समेत उत्तिकै विश्वास गर्थ्यो । फरक मत राख्नेमाथि तुच्छ गाली गर्ने अहिलेको राजनीतिक संस्कारमा सुवास अपवाद मानिनुहुन्छ । उहाँको त्यही विशेष गुण र क्षमता नै पार्टी एकताको पक्षमा प्रयोग हुने ठानेका नेता ओली, प्रचण्ड र माधवलाई मनाउन सकिनेमा विश्वस्त पनि थिए । यसको नेतृत्व लिएका घनश्यामले पिएस, विष्णु र शंकरसँग निरन्तर छलफल गरे । सुवाससँग पनि कुरा भैरहेको थियो । तर, ओलीले आफूलाई प्रधानमन्त्री बनाउने विश्वास थिएन सुवासलाई । कसैलाई बिझाउने गरी अभिव्यक्ति नदिने उहाँले यौटा छलफलमा ओलीको नाम नलिई भन्नुभएको कुरा स्मरण गर्दै एमालेका एक जना उपाध्यक्षले भने, 'तपाईंहरूले गरेको बाँकी ८ पेजमा

## सरकार ढाल्ने खेलाडीहरू यसरी सल्बलाउँदै

*पुस १० गते माओवादीसँग गठबन्धन टुट्दा कांग्रेसभित्र सभापति शेरबहादुर देउवाको खरो आलोचना गर्नेमध्येका थिए - डा. शेखर कोइराला । देउवाले परिस्थितिको ठीक विश्लेषण नगर्दा कम्युनिष्टहरू मिल्ने अवस्था बनेको उनको आरोप थियो । तर, अहिले बेलाबखत बालकोट धाइरहने उनै शेखर माओवादीसित सहकार्य तोडेर कांग्रेस नेतृत्वको सरकार गठन गर्नुपर्ने बहसमा उत्रिएका छन् ।*

*त्यसो त, दक्षिणको विश्वासिलो भनिएका शेखर माओवादीसँगको सहकार्यप्रति अनुदार मानिन्छन् । माओवादीसँग तालमेलकै कारण अघिल्लो पटक देउवा प्रधानमन्त्री बनेको र अहिले राष्ट्रपति कांग्रेसले हात पारेको यथार्थ स्वीकार्न नसकेका उनी चुनावताका पनि तालमेल गर्न नहुने अडानमै थिए । चुनावपछि प्रचण्डलाई प्रधानमन्त्रीमा रोक्न देउवालाई उकासेर कम्युनिष्टलाई मिलाउने अप्रत्यक्ष भूमिका खेलेको आरोप उनीमाथि कांग्रेसभित्रैबाट छ । प्रधानमन्त्री र राष्ट्रपति दुवै नछोड्न शेखरहरूको दबाबले अप्ठेरोमा परेका देउवा पूर्वसहमतिमा अडिन नसकेपछि प्रचण्डलाई एमालेले समर्थन गर्ने अवस्था बनेको यथार्थ अब पुरानो भैसक्यो । देउवाको चलाखीले पुरानो गठबन्धन ब्युँतिएपछि कम्युनिष्टको सहकार्य मात्र तोडिएन, रामचन्द्र पौडेल शीतल निवासको कुर्सीमा पुगे । प्रधानमन्त्रीपछिको वरीयतामा उपप्रधानमन्त्रीसहित महत्वपूर्ण ९ मन्त्रालय कांग्रेसले हाँकिरहेको छ । तर, देउवाको कमजोरीले प्रचण्ड फुत्किएर बालकोट पुगेको आरोप* बाँकी ८ पेजमा

# सेनाका निम्ति चीनबाट ४१ ट्रक सौगात

भूगोल र जनसंख्याको हिसाबले नेपाल सानो देश भइकन पनि यसको भूराजनीतिक बनावटका कारण अन्तर्राष्ट्रिय चासो बढ्दो छ ।

भारत र चीन सीमावर्ती देश भएका कारण उनीहरूको सरोकार रहनु स्वाभाविक नै हुने भयो । सात समुन्द्रपारिबाट अमेरिकाले पनि आफ्ना चासोलाई व्यापक बनाइरहेको छ । हुँदाहुँदा बंगलादेश समेत यसमा पछाडि परेन । सैनिक तालिमका लागि विभिन्न देशबाट ढाका पुगेको टोलीलाई नेपाल ल्याइएको छ । भारतले नेपालसँग सूर्यकिरणसहितको संयुक्त सैनिक अभ्यास चलाउँदै आएको छ भने चीनसँग हुने गरेको सगरमाथा मैत्री सैन्य अभ्यास कोभिडका कारणले रोकिएको छ । उसले नेपाली सेनालाई वर्षेनी १ सय ५० मिलियन आरएमबी, अर्थात् करिब दुई अर्ब बराबरको सैन्य सहयोग दिँदै आएको छ । भूकम्पताका स्वास्थ्य सामाग्री, बख्तरबन्द गाडी दियो । अहिले केरुङबाट केही सैनिक सहायताका सामान ल्याइएका छन् । ती सामान लिनका लागि काठमाडौंबाट सेनाका ट्रकको ताँती लागेको छ । त्यसमा पहिला ल्याइएका सामानका स्पेयर पार्टस् र सञ्चार उपकरण रहेको बुझिएको छ । भदौ २५ गते काठमाडौंबाट ४१ वटा ट्रक स्याफ्रुबेसी गएर २८ गते फर्किएका थिए ।

उता, सैन्य भर्नाका क्रममा पूर्वीपृतना हेडक्वार्टर, इटहरीअन्तर्गतको परीक्षा केन्द्रमा शनिबार भएको फोटो काण्डको चर्चा छ । एकजना परीक्षार्थीले आफ्नो टाँसी अर्कैको परीक्षा दिएपछि उनी गिरफ् बाँकी ८ पेजमा

# शंकरमार्फत उत्तरले के दियो सन्देश

पहिला खरो कुरा, पछि मीठो प्रशंसा ! एमाले महासचिव शंकर पोखरेलसँग चिनियाँ कम्युनिष्ट पार्टीका नेताहरूको प्रस्तुति हो यो ।

खरो कुरा, अर्थात् कम्युनिष्टहरू मिल्नुपर्ने प्रसंग आउँदा शंकरमा त्यति स्फूर्ति थिएन । किनभने, आफ्नै अध्यक्षको व्यवहारका कारण भएको एकता पनि टुटेको चिनियाँहरूलाई राम्रोसँग थाहा छ र अहिले एमालेबाहेकको समाजवादी केन्द्र बनाएर कम्युनिष्टहरू अगाडि बढिरहेका छन् । गत हप्ता चिनियाँ कम्युनिष्ट पार्टीको विदेश विभागका प्रमुख लिउ जियानछाओले बेइजिङमा शंकरसँग भेट हुँदा भने, 'कम्युनिष्टहरू मिल्दा राम्रो हुने थियो ।' गत वर्ष जिम्मेवारी सम्हाल्नेबित्तिकै पहिलो भ्रमणका लागि काठमाडौं आएका जियानछाओले नै एकछिनमा भने, 'नेपालमा कुनै संगठित, व्यवस्थित पार्टी छ भने त्यो एमाले नै हो ।' कम्युनिष्ट पार्टी जनतासँग जोडिनुपर्छ भन्ने माओको आदर्श स्मरण गर्दै उनले एमालेमा त्यो गुण पाइने चर्चा गरे । 'अहिले एमाले प्रतिपक्षमा भए पनि कुनै पनि बेला सत्तारुढ हुन सक्छ । अहिले नै पनि प्रतिपक्षीका रुपमा खेल्ने भूमिका मज्जैले खेल्न सक्छ भन्ने हामीलाई लाग्छ', उनको भनाइ थियो । एमालेले नेतृत्व गरेका विभिन्न स्थानीय तहमा उक्त नेतृत्वलाई सफल पार्न प्राविधिक पनि सहयोग गर्न तयार भएको समेत उनले सुनाए । तर, पोलिट्ब्युरो सदस्य तथा चीनकै ठूलो महानगर चोङछिङका पार्टी बाँकी ८ पेजमा

## श्रीमान छान्दाछान्दै प्रधानमन्त्रीको फोन

खल्तीबाट नाम झिकेर जस्तो पायो त्यस्तो वकिललाई न्यायाधीश बनाउने प्रथामात्रै अन्त्य भएन, भएकै न्यायाधीश पनि इमान्दार र क्षमतावान नहुँदा यसचोटि सेकिएका छन् ।

न्यायपरिषद्ले जिल्ला र उच्च अदालतका निम्ति भदौ २९ गते न्यायाधीश सिफारिस गर्ने क्रममा त्यस्तो भएको हो । जिल्ला न्यायाधीशको वरियतामा अगाडि भएर पनि कार्यसम्पादन विवादित भएका कारण केहीले उच्चमा छिर्न पाएनन् । त्यसमध्ये वरिष्ठतामा सिन्धुलीमा दुई नम्बरका महेन्द्रबहादुर कार्की, भक्तपुरका गोपाल बास्तोलासहित गिरिराज गौतमको नाम पनि काटियो । ती सबै वरिष्ठताको १ देखि ७ नम्बरभित्रका न्यायाधीश थिए । बरु, जागिर अवधी ६ महिनादेखि एक वर्ष बाँकी भएका योगेन्द्र साहसहितका केहीलाई बढुवा गरी उच्च पठाइएको छ । जीवनभरि अदालत धाएर न्याय सम्पादन गर्ने न्यायाधीशलाई जागिर सकिने बेला बढुवा र पेन्सनको न्याय मिलोस् भनी त्यसो गरिएको न्यायपरिषद्स्रोतले जनाएको छ । अर्कातिर, प्रधानन्यायाधीश, न्यायपरिषद्का सदस्यसमेत जनजाति हुनुको फाइदा कानुन व्यवसायीबाट न्यायाधीश सिफारिस हुनेहरूमा परेको छ । ६ जनामा आधा जनजाति परेका छन् । पाटनका अर्जुन महर्जन, तनहुँका यज्ञबहादुर राना मगर र काजीबहादुर राई जनजाति हुन् । त्यसमध्ये यज्ञबहादुर कांग्रेसको क्षेत्रीय सभापति भइसकेका समेत त्यताबाट दुई, एमालेका २ र माओवादी एकले न्यायाधीश पाए । न्यायपरिषद्ले सबै दृष्टिबाट उपयुक्त हुँदाहुँदै पनि प्रभुराम कोइराला, पवन जैसवालजस्ता कानुन व्यवसायीलाई न्यायाधीश सिफारिस गर्न सकेन । तर, दशैंपछि हुने थप २०-२५ न्यायाधीश सिफारिसमा बाँकी ८ पेजमा

# सिंहदरबारमा यस्तो आगो सल्कँदैछ

देशलाई अनेकन कानुन चाहिएको छ । संसदमा छिरेर पनि थुप्रै विधेयक अलपत्र छन् । तर, त्यहींका कर्मचारीलाई सेवा-शर्तको सन्दर्भ आउँदा कसरी तातो लाग्छ भन्ने नमूना अहिले संसद सचिवालयमा देखिन्छ ।

एउटा विषयको कानुन आउँदा आफ्नो स्वार्थसिद्ध गर्न सांसदलाई पढ्न नदिई सही गराउने चलन बढ्दो छ । संसदको आफ्नो भवन छैन । सिंहदरबारभित्र भएको ग्यालरी बैठकलाई संग्रहालय बनाएर अन्तर्राष्ट्रिय सम्मेलन केन्द्रलाई भाडा तिरिएको छ तर त्यहीं नेर संघीय संसद सचिवालयसम्बन्धी ऐन- २०६४ लाई छिटोछिटो पारित गरी आफ्ना भत्ता, सुविधा र निवृत्तिभरण (पेन्सन) को व्यवस्था गर्न अहिले कर्मचारीहरूलाई यति तातो लागेको छ कि, सांसदका घरघर चहार्न केही बाँकी राखेका छैनन् । यसरी देशका लागि अत्यावश्यक सम्पत्ति शुद्धिकरणसहितका कानुन पारित गराउनेतिर कुनै चासो नराखी कर्मचारीले दौडधुप थालेपछि ऐन संशोधनका लागि रास्वपाकी सुमना श्रेष्ठ, सन्तोष परियार, एमालेका महेश बर्तौलासहितले सूचना दर्ज गरेका छन् । त्यसो त ती कर्मचारीको सेवा, सुविधा बढ्नुपर्ने विषयमा दिवंगत पूर्वसभामुख तथा संविधानसभाका अध्यक्ष सुवास नेम्वाङको पनि सदाशयता थियो । सामान्यतया सरकारी सेवाका कर्मचारीले निश्चित समय जागिर खाएपछि जीवनभर निवृत्तिभरण पाउने व्यवस्था छ । तर, राजनीतिक नियुक्तिमा आएका संसद सचिवालयका महासचिव बाँकी ८ पेजमा

# कमरेडहरूमा फेरि अर्को कित्ताकाट

देशका लागि एउटा शालिन राजनीतिज्ञ, पार्टीका निम्ति समन्वयकारी नेता हुनुहुन्थ्यो, सुवास नेम्वाङ । उहाँको निधनपछि एमालेभित्रको शक्ति सन्तुलनमा केही फेरबदलको संकेत देखा परेको छ । यतिबेला ललितपुरस्थित एमाले मुख्यालय च्यासलमा पार्टीका नियमित गतिविधिभन्दा आगामी महाधिवेशनकेन्द्रित विषयहरूले बढी ठाउँ पाउने गरेका छन् ।

भित्रभित्रै विकास भइरहेका गुट, उपगुटका अनेकन दृष्टान्त त्यहाँ भेटिन्छन् । त्यसक्रममा सुवास नेम्वाङको निधनपछि उहाँको सदाशयताप्राप्त एउटा समूह तितरबितर हुने दिशातर्फ लागेको छ । स्पष्ट छ, एमालेभित्र उपाध्यक्ष विष्णु पौडेल र महासचिव शंकर पोखरेलका अलग-अलग समूह बनिरहेका छन् । यसको स्पष्ट चित्र लुम्बिनी प्रदेशमा सम्पन्न अधिवेशनले देखाइसकेको छ । सुवासको सदाशयता विष्णुतिर थियो । तर, उहाँको निधनपछि विष्णुतिरै रहेको एउटा समूहलाई शंकरहरूले तान्ने खतरा बढेको छ । पूर्वराष्ट्रपति विद्या भण्डारीले पनि नदेखिने गरी साथ दिइरहनुभएको र उस्तै परे नेतृत्व नै गर्नुपर्ने गरी सुवासलाई विकास गरिरहनुभएको थियो भन्ने चर्चाले च्यासलमा ठाउँ पाएको छ । '१० बुँदे', अर्थात् अन्तिम अवस्थामा माधव नेपालको साथ छोड्नेहरूको नेतृत्व सुरेन्द्र पाण्डेले गरिरहेका थिए । अब त्यो समूहलाई शंकर पोखरेलले आफूतिर तानेर फाइदा लिने सम्भावना छ । किनभने, विष्णु र सुरेन्द्रको राम्रो सम्बन्ध छैन । एक समय त उनीहरू बीच बाँकी ८ पेजमा

## जासुस प्रमुख दिल्ली जाँदै

बीपी कोइराला गृहमन्त्री हुँदा २००८ सालमा स्थापित संस्थाको ७०औं वार्षिकोत्सव मनाउन छाडीछाडी कोही पदाधिकारी विदेशीको निम्तो मान्न कुद्छ भने त्यसलाई कस्तो राष्ट्रसेवक भन्ने ? यस्तो प्रश्न उठेको छ, सिंहदरबार, पुतली बगैंचास्थित गुप्तचर विभागमा ।

अघिल्लो महिना भदौ १२ गते विभागको वार्षिकोत्सव मनाउन छाडेर गुप्तचर प्रमुख हुतराज थापा अघिल्लै दिन दक्षिण कोरियातिर हान्निएका थिए । अहिले भारत जाने तयारीमा छन् । कोरिया जानुअघि उनले नेपालमा पाँच सदस्यीय उताको गुप्तचर टोलीलाई वैशाख १ गते स्वागत सत्कार गरेका थिए । त्यसको पैंचो खान संस्थाको वार्षिकोत्सव छाडेर त्यता लागे । कोरियाबाट नेशनल इन्टेलिजेन्स सर्भिसका एसिया प्यासिफिक चिफ किम हाओनले निम्तो पठाएको लगत्तै हुतराज त्यता हान्निए । यही साता एसपी राजु शर्मासहित बाँकी ८ पेजमा

## त्यसो गर्न कहाँ दिन्छ र कानुनले ?

हामी नेपाली कानुन पुराना भए भन्छौं र सबै दोष 'थोत्रा नियम' तिर देखाउँदै बेथितीलाई प्रश्रय दिन्छौं । तर, कतिपय अन्तर्राष्ट्रिय अभिसन्धि र महासभालाई मानिदिनुपर्ने कारण थुप्रै काम रोकिएका छन् ।

जतिबेला नेपालले विभिन्न देशमा दूतावास खोल्यो, त्यसबेलाको तुलनामा अहिले परिस्थिति बदलिएको छ । उतिबेला खाडीमा नेपालीको संख्या न्युन थियो । अहिले त्यस्तो जनशक्ति बढ्दो छ । त्यसलाई व्यवस्थापन गर्न रोजगारदाता मुलुकका हकमा 'लेबर कन्सुलेट', अर्थात् श्रम वाणिज्यदूत राख्नुपर्ने अवस्था छ । तर, सन् १९६१ को भियना कन्भेन्सन अन डिप्लोम्याटिक रिलेसनले त्यो अनुमति दिँदैन । श्रम, रोजगार तथा सामाजिक सुरक्षा मन्त्रालयले विभिन्न देशमा लेबर कन्सुलेट राख्नुपर्ने मागसहित परराष्ट्रलाई ताकेता गरिरहेको छ । भियना कन्भेन्सनमा एउटा देशले अर्को देशमा दूतावास राख्ने र व्यापारिक सम्बन्धका बाँकी ८ पेजमा

# चीनले दिन चाहेको, नेपालले लिन नपाएको

भूराजनीतिक दाउपेचले नेपाललाई कस्तो बनाइदियो भने, दिन चाहनेले दिन्छु भन्दा पनि लिन आनाकानी गर्नुपर्ने ! यस्तै भएर रुसले गरेको विश्वासमा समस्या उत्पन्न भएको छ । फेरि चीनसँग करिव-करिव त्यही हुँदै छ ।

प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड' पर्सि असोज ५ गते अमेरिकाबाट सीधै चीन उत्रिने कार्यक्रम छ । उक्त भ्रमणका सन्दर्भमा कतिपय चासो चीनका तर्फबाट, कतिपय नेपालका तर्फबाट पेश हुनु स्वाभाविक मानिन्छ । तर, चीनले नेपाललाई लक्ष्य गर्दै अगाडि सार्न चाहेका कतिपय महत्त्वाकांक्षी परियोजनाप्रति उदासिनता प्रकट गरिएको पाइएको छ । कारण हो, परराष्ट्र र अर्थ मन्त्रालयका कर्मचारीलाई पश्चिमा मुलुक मात्रै प्यारो लाग्नु ।

काठमाडौं उपत्यकामा कहिल्यै विद्युत प्रशारण अवरोध नहुने गरी पावर हाउस निर्माणका निम्ति चीनको एक्जिम बैंकसँग अनुदान माग गर्ने प्रस्ताव थियो । यसबारे विद्युत् प्राधिकरणले परराष्ट्र र त्यसले पनि अर्थ मन्त्रालय हुँदै प्रस्ताव पठाउनुपर्ने हो । तर, विद्युतबाट गएको पत्र परराष्ट्रबाट अर्थमा पुग्यो कि पुगेन ? गएकै भए पनि चीनमा एजेण्डाभित्र त्यो विषय पर्ने भयो कि भएन ? आजसम्म निश्चित छैन । विद्युतका हाकिमहरूको आशंका छ, 'गएन होला !' यससँगै चीनको गहिरो चासो छ, पहिल्यै सहमति भइसकेको चार सय केभीको गल्छी-रसुवागढी- बाँकी ८ पेजमा

# करणीकाण्डका हाकिमहरूमाथि खै त कारबाही

सार्वजनिक प्रशासनको पवित्र र स्वच्छ छवि किन निरन्तर स्खलित हुँदै छ ? अकुत आर्जन र भ्रष्टाचार मुद्दामा परे पनि विशेष अदालतले 'सुन पानी' छर्किहाल्छ । यौनलगायत अनेकन काण्डमै मुछिए हाजिर गर्न र जागिर खानलाई सामान्यको 'बरण्डा' छँदै छ । यही कारण कर्मचारीमा छाडापन बढिरहेको हुनुपर्छ ।

कर्मचारीलाई लाग्ने काण्ड भ्रष्टाचार र अनियमितता मात्रै हैन । एक महिनामै चार हाकिम यौन काण्डमा मुछिइसके । जसमध्ये एकले कैद भुक्तमान गर्दै छन्, अर्को हिरासतमा छन् । बाँकी दुईलाई सामान्य प्रशासनको 'अतिरिक्त समूह' मा थन्क्याइएको छ । ललिता निवास जग्गा र सुन काण्डमा तानिएका दुई सहसचिव हाजिर गर्छन्, फर्कन्छन् । सामान्य प्रशासनको बार्दली यस्तै हाकिमलाई थन्क्याउने थलोमा रुपान्तरण भएको छ ।

घरमा काम सघाउने युवतीमाथि यौनशोषण गरेको आरोप लागेपछि इञ्जिनियर हरिकुमार पोखरेल जेल पुगेका छन् । मध्यपहाडी लोकमार्ग आयोजनाका निर्देशक पोखरेललाई काठमाडौं जिल्ला अदालतले जबर्जस्ती करणी मुद्दामा पुर्पक्षका लागि थुनामा पठाए पनि जागिर गइसकेको छैन । हालै भौतिक मन्त्रालयले गरेको सरुवामा उनको दरबन्दी सडक विभाग, पुलमा तानिएको छ । दुई साताअघि चितवनस्थित जिल्ला तथ्यांक कार्यालयका हाकिम यज्ञमूर्ति भण्डारीको कर्तुत छरपष्ट बाँकी ८ पेजमा

# नेपालमा नवधनाढ्यहरूले कसरी छल्दैछन् कानुन

कानुनले सबै कसुरहरूलाई एउटै नजरले चिन्दैन । कुन कसुरमा कसले सरोकार राख्ने भन्ने प्रसंग फरक-फरक छन् । यस्तो हुँदा कतिपय गम्भीर मुद्दा फासफुस भएका छन् त कतिपय एक किसिमले चल्नुपर्ने मुद्दा अर्कै किसिमले अगाडि बढ्ने गरेका छन् । देशमा भइरहेका बहुचर्चित अपराधका सन्दर्भमा त्यस्तो पाइएको छ । अरु छ जनासहित सिआईबीले क्यान्सर पीडित भन्सार एजेन्ट रुक्मिना सुब्बा लिम्बूलाई मुद्दा नचलाउन सिफारिश गऱ्यो तर सरकारी वकिल कार्यालयले छानीछानी त्यही लटका अरु सबलाई छाडेर उनै रुक्मिनालाई मात्रै महाअपराधी बनाउन खोज्यो ।

ललिता निवास प्रकरणमा सिआइबीले धेरै ठूलो दुःख र झण्झट उठाउँदै संगठित अपराध अन्तर्गत मुद्दा तयार पाऱ्यो । अदालतमा टेक्नुअघिसम्म सरकारी वकिलसँग मिल्दै-मिल्दै र पछि पौंठेजोरी खेल्दै चल्नुपऱ्यो । अर्थात, अदालत पुगिसकेपछि उक्त मुद्दा 'संगठित अपराध होइन' भन्ने राय सरकारी वकिलबाट जाँदा मुद्दा नै फासफुस हुनेतिर गयो ।

भन्सारको विचित्र हेरौं- रक्सी, मोबाइल ल्याउँदा थाहा हुने, किलोका किलो सुन ल्याउँदा पत्तै नहुने ! त्यहाँ अनियमितता र मिलेमतो भयो भन्दा उल्टै कर्मचारी हड्तालमा उत्रिने ! ललिता निवास प्रकरणमा प्रहरीले त्यत्रा मान्छे थुन्यो, अन्तिममा मुद्दा चल्दैन भनियो । पूर्वनिर्वाचन आयुक्त तथा तत्कालिन मालपोत अधिकृतका हैसियतले सुधीरकुमार शाह पहिला पक्राउ परे, पछि मुद्दा नचल्ने भयो । नचल्ने मुद्दामा मान्छे किन समातियो ? त्यसबाट व्यक्तिले गुमाउने सामाजिक प्रतिष्ठा र मानमर्दनको पुर्ताल राज्यले कसरी गर्छ ?

सुनको मुद्दामा पनि सुन भेटेकै हो । जुन कम्पनीको सुन समातिएको छ, त्यसले त्यसअघि ल्याएको ब्रेक सुजभित्र पनि सुन नै भनेर बिगो कायम गरिएको छ । तर, त्यसमा संगठित अपराध ऐनलाई प्रयोग गर्ने विधि देखिएन । त्यसैले भन्सार ऐनअनुसार मुद्दा चलाउनुपर्ने अवस्था छ । यति मूल्यको सुन तस्करी भनिसकेपछि मुद्दा चलाउनका लागि सुन जफत गर्नुपर्ने हो । तर, भन्सारले मुद्दा हेर्ने भइसकेपछि भन्सार र राजस्वले त्यसलाई संगठित अपराध मान्न सक्दैन । जसले अनौपचारिक ढंगले अपराध गर्छ, त्यसले नै अपराधलाई संगठितमा रुपान्तरित गर्ने हो । भन्सारबाहिरबाट जफत भएको सुनका मामिलामा राजस्व छल्यो भन्ने दफामात्रै आकर्षित हुँदा, अर्थात् कि राजस्व चुहावट कि भन्सार ऐनअनुसार मुद्दा अगाडि बढ्छ । कानुनतः भन्सार ऐनको मुद्दा हेर्ने प्रहरीले हैन । त्यसो त संगठित अपराधका लागि मुद्दा हेर्ने एउटा निकाय, अर्को अपराधका निम्ति अर्कै निकाय भन्ने नहुनुपर्ने हो । तर, यसमा त्यस्तै हुन खोजिरहेको छ । निजामती कर्मचारीहरूको दावी के छ भने, सुन वा भन्सारको मुद्दा विशेषज्ञ प्रहरी हैन । सुन जफत हुन्छ, त्यसलाई भोलि भन्सारले लग्यो भने संलग्न व्यक्ति तस्कर नै हुन् भनेर मुद्दा अगाडि बढाउँछ । तर, यही मुद्दालाई संगठित अपराधका रुपमा अगाडि बढाउँदा जित्ने स्थिति छैन । हुन्थ्यो भने, पहिला ३३ किलो सुनवाला गोरेकाण्ड अन्ततः ज्यानमार्ने मुद्दामा परिणत हुँदैन थियो । अहिले त्यसका प्रमुख कसुरदार चुडामणि उप्रेती (गोरे) सनम शाक्यलाई जंगलमा लगेर मारेको अभियोग लागी जेल परेका छन् । संगठित अपराधमा मुद्दा चलाइँदा पक्राउ परेका बाँकी सबै कसुरदार साधारण तारेखमा छुटेका छन्, थुप्रैले सफाई पाएका छन् । अर्थात्, नेपालमा मान्छे थुन्दैमा रमाउने संस्कृतिको विकास बाँकी ८ पेजमा

## किन उक्सिएन जग्गा कारोबार

जग्गा कारोबारमा मन्दी आएको एक वर्षपछि सरकारले भूउपयोग(पहिलो संशोधन) नियमावली २०८० जारी गरे पनि अस्पष्ट नियमावलीका कारण यो कारोबार चलायमान हुन सकेको छैन । नापी र मालपोत कार्यालय आफैँले नियमावलीमा अस्पष्ट भएका कारण कारोवार गर्न नसकिने व्यहोरा अवगत गराएका छन् । सरकारले ल्याएको नियमावलीले जग्गा प्लटिङ गर्नेलाई सहज बनाउँदै सर्वसाधारणलाई कित्ताकाट हुनै नसक्ने गरी बाँधेको छ । 'मूल नियमावलीको नियम १२ मा गरिएको संशोधनको २ को (क) मा सम्बन्धित स्थानीय तहले निर्धारण गरेको मापदण्डका आधारमा बाटोमा पर्ने जग्गा स्थानीय तहले खुलाई नपठाउँदा कित्ताकाट गर्न मिल्ने हो कि होइन ? मालपोत कार्यालय काभ्रेलाई सोधेका छौं', नापी अधिकृत सुरेश मानन्धरले भने, 'धुलिखेल नगरपालिकाले श्रीखण्डपुर ६, कित्ता नम्बर ५४०७, ५४०५ को लिखत प्राप्त भई त्यस लिखत आवासीय क्षेत्रमा रहेको ०-४-०-२ भन्दा कम बाँकी ८ पेजमा




दिनेश रायमाझी

# सानो कुरा, धेरै सन्तुष्ट हुने स्वभाव

विकास र समृद्धि नखोज्ने र नचाहने कुन देशका जनता पो होलान् र नेपाली जनताले नखोज्नु ? तर हामीले खोजेको विकास र समृद्धि जापान, स्विट्जरल्याण्ड, अमेरिका र युरोपका देशको जस्तो होइन । खोजेको सुख पनि उनीहरूको जस्तो होइन । हामीले खोजेको सुख भनेको देशका कर्णधार भनेर चिनिने स-साना विद्यार्थीले झुण्डिएर खोला तर्दा तुइनबाट खसेर ज्यान गुमाउनुपर्ने अवस्था अन्त्य हुनु हो । सुत्केरी व्यथा लागेकी महिलालाई बच्चा जन्माउने स्वास्थ्य चौकी नभएकै कारण ज्यान गुमाउनुपर्ने अवस्था नभए हुने थियो भन्ने हो । अर्थात् हाम्रो विकास र समृद्धिको चाहना र प्राथमिकता ठाउँ विशेषअनुसार फरक-फरक छन् । देशको एउटा भागका जनतालाई तुइनको ठाउँमा झोलुंगे पुल बन्नु नै ठूलो विकास भयो भन्ने अवस्था छ भने अर्को भागका जनतालाई सुरक्षित तरिकाले सुत्केरी हुन सकिने स्वास्थ्य चौकी बन्नु विकास भएको हुन सक्छ । विकास र समृद्धि सापेक्ष भूगोल सापेक्ष हुने नै भयो । काठमाडौंका जनताको लागि विकास भनेको मेट्रो ट्रेन, वातानुकुलित नगर बस सेवा हुन सक्छ तर कर्णालीका जनताको निम्ति विकास भनेको पक्की सडक, पुलपुलेसा हुन् । कम्युनिष्ट पार्टी नेतृत्वको सरकारले देश विकास र समृद्धिको चाहना र आवश्यकतालाई बुझेर कुरा गर्दा सबैलाई खुशी महसुस हुनु बिल्कुल स्वाभाविक हो । तर, कोरा गफले प्रदान गरेको यो खुशी, पानीजहाज र चुच्चे रेलमा गएर यसरी ठोक्किन पुग्यो कि अहिले समृद्धि भन्ने कुरा कम्युनिष्टलाई उडाउने विषय बनेको छ ।

कम्युनिष्टको सरकारले देशको वस्तु अवस्थालाई ध्यानमा राखेर विकास र समृद्धिको कामलाई अघि बढाउन सकेको वा त्यसअनुसार काम गरिदिएको भए त्यही काम कम्युनिष्ट एकताको निम्ति मजबुत आधार बन्न सक्थ्यो । (नेकपा) आज तीन टुक्रा भएर सत्ताबाट गलहत्तिई एक अर्कालाई सत्तोसराप गरेर दिन काट्नुपर्ने अवस्थामा पुग्ने थिएन । कम्युनिष्टकै नेतृत्वमा देश अघि बढिरहेको हुने थियो । सत्ताप्रतिको अतिलिप्सा र अतिदम्भले सत्ताबाट मात्रै विमुख हुन परेन कि त्यसले देशमा दक्षिणपन्थी उभारलाई मलजल गरिरहेको छ । धरानको घटना र काठमाडौंको खुकुरी काण्ड यत्तिकै घटेको होइन । नेपाली जनता ठूलो अपेक्षा राख्ने मनोवृत्तिका होइनन् । सानै कुराले पनि धेरै खुशी हुने स्वभाव हो । सानै कुरामा पनि धेरै खुशी हुन सक्ने चरित्र गज्जबकै लाग्छ । बाँकी ८ पेजमा

आस्था प्रकाशन प्रा. लि.को निमित्त

| | | |
|---|---|---|
| सम्पादक | : | किशोर श्रेष्ठ |
| प्रबन्ध सम्पादक | : | राजेन्द्र स्थापित |
| कार्यकारी सम्पादक | : | विश्वमणि सुवेदी |
| कार्यालय | : | सानेपा, ठाडोढुंगा, ललितपुर |
| | | फोन : ५५४१५५२, ५५२२५५१ |
| इमेल | : | jana . aastha@gmail . com |
| वेबसाइट | : | www . janaaastha . com |
| मुद्रण | : | सुजल अफसेट प्रेस, बागबजार, फोन : ४२३३४५९ |


## सम्पादकीय

### मन्त्रीले मनपरि गर्दा के हेर्छ अख्तियार ?

प्रधानमन्त्री हुन् वा अन्य मन्त्री, विदेश जाँदा आफ्ना स्वकीय सचिवलाई पनि सँगै लैजाने चलन नेपालमा जारी नै छ । यस्ता स्वकीयसँग संस्थागत जिम्मेवारी र दीर्घकालीन महत्वको सरकारी दायित्व हुँदैन । मन्त्री फेरिनेबित्तिकै सेवाबाट स्वतः बाहिरिनेहरूलाई सरकारी खर्चमा बाहिर लैजानु देश र जनताका लागि कत्तिको फाइदाजनक होला ? एकपल्ट छलफल नगरी नहुने भएको छ । स्वकीय सचिव जागिर भनेको करारको जागिर हो । सरकार फेरिएसँगै जागिर जानेले विदेश भ्रमणबाट सिकेका काम कुरा लागू गर्न सक्दैनन् । निर्णायक भूमिका वा सल्लाहकारको भूमिका पनि निभाउँदैनन् । स्वकीय सचिवलाई कानुनले पूर्णरूपमा चिन्दैन । किनभने मन्त्रीको तोकादेशमा स्वकीयको नियुक्ति हुन्छ । स्वकीयको क्षमता र योग्यताको कुनै जाँच हुँदैन । प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डले सरकारी भ्रमणमा फजुल खर्च रोक्ने र मितव्ययिताको नीति अवलम्बन गर्ने घोषणा गरे पनि व्यावहारिक कार्यान्वयन भने निकै लाजमर्दो देखिएपछि यो विषय चर्चामा आएको हो ।

प्रधानमन्त्रीले संयुक्त राष्ट्रसंघको ७८औं महासभामा भाग लिने र फर्किने क्रममा छिमेकी चीनको समेत भ्रमण गर्ने कार्यक्रम तय भएको छ । लामो अवधिको यस कार्यक्रममा भाग लिन जान ठिक्क परेको २७ सदस्यीय टोली जम्बो भन्दै आलोचना भएपछि उहाँको सचिवालयलाई ५ जना अर्थात् मिनी आकारमा झारियो । गरिब मुलुकको तामझाम, आफ्नालाई घुम्ने अवसर, फजुल खर्चलगायत विभिन्न दृष्टिकोणबाट प्रश्न उठेपछि प्रधानमन्त्रीले आफ्नो टोली त सानो बनाउनुभयो तर सोही भ्रमणका लागि सवारीमन्त्री बनेका परराष्ट्रमन्त्री साउदको डफ्फा भने प्रधानमन्त्री दाहालको अनुपातमा ठूलो छ । जबकि अमेरिकाको वासिंगटन र न्युयोर्कमा नेपाल सरकारले स्थापना गरेका कार्यालय र परराष्ट्रका कर्मचारी छन् । विज्ञहरूका अनुसार विदेश भ्रमणमा स्वकीय सचिवलाई सामेल गर्नु भनेको नीतिगत भ्रष्टाचार नै हो । किनभने उनका लागि आतेजाते, बसाइ, दैनिक भ्रमण भत्ताजस्ता सबै सुविधा उपलब्ध गराउनै पऱ्यो । राज्यले यत्तिका धेरै खर्च व्यहोर्नुपर्ने स्वकीय सचिवबाट पाइने उपलब्धि भने शून्य नै हुने देखिएपछि यसलाई नीतिगत भ्रष्टाचारको श्रेणीमा राख्नुबाहेक अर्थोक विकल्प रहन्न ।

व्यक्तिको रिस वा पूर्वाग्रह होइन, प्रश्न त के मात्र हो भने मन्त्रीको पीए जान हुँदा मितव्ययिताको नाममा प्रधानमन्त्रीका राष्ट्रिय सुरक्षा सल्लाहकार शंकर बैरागी, प्रमुख राजनीतिक सल्लाहकार हरिबोल गजुरेल, प्रेस सल्लाहकार गोविन्द आचार्य, निजी चिकित्सक डा. युवराज शर्मा, विषयविज्ञता वा पदीय मर्यादा भएका पात्रहरू किन छुटे ? के मन्त्रीका पिएको काम उनले अमेरिकाका धनाढ्य बस्ने म्यानहाटनमा नेपाली राजदूतलाई लिएर मर्निङवाकमा निस्केको भिडियो र फोटो पोष्ट्याउने मात्रै हो ? परराष्ट्रमन्त्रीले यस्तो बेला अन्य देशबाट आएका प्रतिनिधिसँग सम्पर्क र सम्बन्ध विस्तार गर्ने र उनीहरूसँग प्रधानमन्त्री दाहाललाई भेटघाट गराउने, सम्बन्ध प्रगाढ बनाउनुका साथै नेपालको विकासमा पुऱ्याउन सक्ने सहयोग र सहकार्यबारे छलफल गराउने वातावरण तयार गर्न अग्रसर हुनुपर्थ्यो ।

नेपालबाट जाने कतिपय मन्त्री र सरकारी अधिकृत दूतावासमा 'नन पेइङ गेष्ट' हुने तर सरकारी कागजात भने 'पेइङ गेष्ट' बनाउने चलन छ । परराष्ट्र सेवाबाट अवकाशप्राप्त एक भुक्तभोगीका अनुसार पञ्चायतकालमा भने विदेश गएका बेला सकेसम्म राजदूतावासमै बस्नुपर्ने, अन्यत्र बसे होटलको बिल लिएर आएपछि मात्रै भुक्तानी दिने प्रचलन थियो । अन्यथा त्यो भ्रष्टाचार ठहरिन्थ्यो । त्यसबखत भारतमा सर्किट हाउस भनेजस्तै नेपालभित्रै पनि सरकारले बनाएका वा सञ्चालन गरेका अतिथि गृहमा बास बस्नुपर्थ्यो । त्यस्ता गृह अहिले कसको मातहतमा कसरी सञ्चालन गरिएका छन् ? कसैले खोजखबर गरेको पाइँदैन । पञ्चायतकालमा न्यून खर्चको भुक्तानीमा अतिथि गृहमा खाना र बसाइको राम्रो प्रबन्ध हुन्थ्यो । र, कहिलेकाहीँ वैदेशिक भ्रमणमा स्वकीय लिएर जानुअघि अर्थ मन्त्रालयबाट स्वीकृत लिनुपर्ने चलन थियो । तर, अहिले त उल्का नै भएको छ । पञ्चायतकालमा पिएको नाम वैदेशिक भ्रमण गर्ने टोलीमा भेटिँदा अर्थ मन्त्रालयले अस्वीकृत गरिदिएका कैयौं उदाहरण भेटिन्छन् । विदेशमा परराष्ट्र मन्त्रालयको पूरै प्रणाली क्रियाशील हुने हुनाले परराष्ट्रबाहेक अन्य मन्त्रीले स्वकीय लग्नै पर्ने अवस्था भए सरकारको अधिकृत तहका निजी सचिव लग्न सुझाव दिइन्थ्यो । यस्ता काममाचाहिँ कडिकडाउ हुनुपर्ने हो । राजश्वले सरकारी खर्च धान्न नसकेको अवस्थामा मितव्ययिताको नारा मात्रै उराल्ने तर फजुल र अनुत्पादक खर्च कटौती गर्न नसक्ने हो भने मुलुकको ढुकुटी रित्तिन धेरै समय लाग्दैन ।

## जनप्रतिनिधिलाई सडकको कुकुर भन्दा परर्रर ताली

कार्यक्रम थियो जिल्ला समन्वय समिति लमजुङले आयोजना गरेको ०७९/०८० को वार्षिक समीक्षा । आठै वटा पालिका, जिल्लास्थित सबै विकासे अड्डाहरूको प्रगति विवरण र आगामी योजनाबारे राखिएको सो कार्यक्रमका प्रमुख अतिथि थिए नेकपा एमालेका उपमहासचिव तथा लमजुङबाट निर्वाचित सांसद पृथ्वीसुब्बा गुरुङ । मध्यनेपाल नगरपालिकाका मेयर रमेशकुमार पाण्डे र दोर्दी गाउँपालिकाका अध्यक्ष युवाराज अधिकारीबाहेक सबै पालिकाका प्रमुख, उपप्रमुख, प्रदेश माननीयलगायत झण्डै सयको हाराहारीमा कर्मचारी थिए । अरुका प्रस्तुति सुनिसकेपछि आफ्नो पालोमा गुरुङले पालिका प्रमुखहरूको झाँको झारे । राजमार्गमा झुक्दै गुडिरहेका गाडीको पछाडि दौडने कुकुरभन्दा हाम्रा पालिका प्रमुखहरू फरक नदेखिएको भनेपछि कर्मचारी लाइनबाट तालीको वर्षा हुन थाल्यो ।

'स्थानीय पालिका आफैं सरकार हो । उसलाई संघीय कानुनसँग नबाझिने गरी ऐन बनाउने अधिकार छ । आजको पालिका हिजोको गाविसजस्तो हैन । तर, आज पनि सञ्चालन विधि उस्तै छ । हिजोकै जिल्ला परिषद् या गाउँ सभाकै पारामा चल्ने कि परिवर्तन हुने तपाईंहरूकै हातमा छ । गुरुङले स्थानीय सरकार प्रमुखहरूलाई यसरी उक्त संज्ञा दिएका हुन् । क्व्होलासोथर, दोर्दी र दूधपोखरी गाउँपालिकाले बरु केही नयाँ सोच अगाडि सारेको देखियो । सुन्दरबजार र राइनास त पालिका भन्नलायक पनि देखिएनन् । आफ्नै पालिकाले प्रस्तुति गर्दै गर्दा अगाडिको रोमा बेंसीशहरका मेयर गुमानसिंह अर्याल र प्रदेश सभासद् भेषबहादुर पौडेलको छेवैमा बसेका राइनास नगरपालिकाका मेयर खड्कबहादुर गुरुङ घुर्न थालिसकेका थिए । जिल्ला समन्वयको हलमा बिहान ८ बजे शुरु भएको कार्यक्रममा यसरी घुर्दै निदाउने मेयरले के गर्लान् भनेर हँसीमजाको बाटो बनिहाल्यो । संघ र प्रदेश सरकारले दिएको बजेटसमेत बेरुजु र फ्रिज गराएको तर दैलो अगाडिको गौंडो खाल्डोसमेत नपुरिएको प्रमुख अतिथि गुरुङको आरोप थियो । गुरुङले आफू मुख्यमन्त्री हुँदा प्रदेशको २५ वर्षे योजना बनाएको र तीन वर्षमा नागरिकले स्मरण गर्ने काम गरेको दाबी गरे । 'एक मेघावाटसम्मको हाइड्रोपावर पालिकाले निर्माण गर्न सक्छ । उत्पादन बढाउने, स्वरोजगार सिर्जना गर्ने र आन्तरिक राजस्व वृद्धि गर्नतिर पालिकाहरूले योजना बनाउन पर्दैन ?' गुरुङको प्रश्न थियो । एक पटक निर्वाचित भएपछि पाँच वर्ष तपाईंहरूलाई कसैले हल्लाउन सक्छ र ? यस्तो अवसरलाई सदुपयोग नगरेर भित्तामा सजिनका लागि मात्र के अर्थ छ र !

- *अञ्जनकुमार*

# चित्रलेखाले निम्त्याएको रणसंग्राम

• सन्तोष बराइली

छरपष्ट आश्वासनको भारले थिचिँदै गएपछि कांग्रेस नेत्री चित्रलेखा यादवले आफ्नो भूगोलमा पुनरागमनका लागि अनेक कष्ट सहनुपरेको छ ।

सिरहा, नवराजपुर गाउँपालिकाको पोखरी विवाद यतिबेला चरमोत्कर्षमा छ । दुवै पक्षको गोप्य तयारीले गुरिल्ला युद्धलाई आमन्त्रण गरिरहेको भान हुन्छ । पोखरी संघर्ष समिति गठन यसैको पटाक्षेप हो । शिवराम यादवको नेतृत्वमा गठित समितिले पोखरी भोगचलन गरिरहेकाहरूसँग जनही १० हजार रूपैयाँ उठाउनुले पनि विभिन्न शंका उत्पन्न गरेका छन् । ७१ वटा पोखरीबाट १० हजारका दरले ७ लाख १० हजार रूपैयाँ हुन्छ । कौडीको भाउमा हतियार उपलब्ध हुने भारतीय बजार पिपराहीसँग जोडिएको नवराजपुर गाउँपालिकामा संकलित यो रकम जुनसुकै बेला अप्रिय घटनामा दुरूपयोग हुने सम्भावनालाई नकार्न सकिँदैन ।

**उदय नयाँ ध्रुवको**

स्वभावतः शिव उद्गार यादव उर्फ शिवा विद्रोही मानिन्छन् । राजनीतिशास्त्रमा स्नातक गरेका शिवा छुवाछुत, गरिब र निमुखामाथिको दमनविरूद्ध आवाज बुलन्द गर्थे । माओवादी युद्ध आगोसरी दन्कँदै गर्दा क्याम्पस पढिरहेका उनी माओवादी राजनीतिबाट अत्यन्तै प्रभावित थिए । पढाइ छाडेर तत्काल राजनीतिमा होमिन भने चाहेनन् ।

स्नातक सक्नासाथ तराई जनतान्त्रिक मुक्ति मोर्चाबाट राजनीतिक यात्रा शुरू गरेका शिवाले तत्कालीन उपेन्द्र यादव नेतृत्वको मधेशी जनअधिकार फोरमबाट शान्तिपूर्ण राजनीतिक यात्रा तय गरे । उपेन्द्र यादवलाई राष्ट्रिय राजनीतिमा स्थापित गर्ने मधेश आन्दोलनमा ज्यानको बाजी लगाएर होमिए । उनकै नेतृत्वमा आन्दोलनमा होमिएका गाउँले रमेश महतोले सहादत प्राप्त गरे । आफ्नै आँखाअगाडि प्रहरीको गोलीले रमेश महतो ढलेको दृश्यले उनलाई समाज परिवर्तनको मुद्दा छाडेर भगौडा बन्ने छुट दिएन । लड्दै गए, भिड्दै गए । अद्यापि, उनको लडाइँ जारी छ ।

उतिबेला नेपाली कांग्रेसकी नेत्री चित्रलेखा यादवको दबदबा थियो । नवराजपुर चित्रलेखाको माइतीघर थियो, यहीँबाट पटक-पटक चुनाव जितेर राष्ट्रिय राजनीतिमा चम्किएकी थिइन् । शिक्षामन्त्री हुँदै उपसभामुखसमेत बनेकी चित्रलेखाको राजनीतिक यात्रामा शिवाको पनि प्रत्यक्ष साथ-सहयोग छ । तर, चित्रलेखा नातावादमा फसिन् । आफन्त र नरनाता केन्द्रित राजनीति थालिन् । समाज परिवर्तन चित्रलेखाको राजनीतिक नारा मात्रै बन्यो । समाजका यावत् समस्या ज्यूँकात्यूँ रहे । परिवर्तनको प्रतीक्षामा रहेको मधेशका देहात चित्रलेखाको विकृत राजनीतिले झन् निराश बन्यो । उनको झुटा आश्वासनले शिवउद्गार यादवहरूका सपना मूर्छित बने । मृत सपनाको चाङबाट शिवउद्गार ब्युँतिए । स्नातकको रिजल्ट प्रकाशन हुनासाथ होलटाइमर राजनीतिक यात्रामा झोला भिरेर निस्किए । यही समयमा पितालाई गुमाए । घरपरिवार चलाउन वैवाहिक जीवनमा बाँधिए । शोषितपीडितको मुक्तिका लागि राजनीतिमा होमिएका उनलाई पछाडि फर्कने छुट थिएन । चित्रलेखाले धोका दिएको निश्कर्ष थियो शिवाको । आफ्नो समाज र गाउँठाउँको आमूल परिवर्तन शिवाको लक्ष्य थियो ।

**ब्यालेटको परीक्षा**

०६२/६३ को जनआन्दोलनले तत्कालीन राजा ज्ञानेन्द्रलाई घुँडा टेकायो । मुलुक संघीय लोकतान्त्रिक गणतन्त्रमा औपचारिक रूपमा प्रवेश गऱ्यो । माओवादी युद्ध नभएको भए सायद यो उपलब्धि तत्कालका लागि सम्भव थिएन भन्ने निश्कर्षमा पुगेका शिवाले माओवादी पृष्ठभूमिबाट उदाएको जनतान्त्रिक छाडेर तत्कालीन फोरम प्रवेश गरे । र, शुरु गरे ब्यालेटको राजनीति ।

गाउँका समस्या उस्तै थिए । उस्तै थिए, चित्रलेखा यादवको आश्वासनबाट वाक्कदिक्क नवराजपुरका जीवन । गणतन्त्र स्थापनापछिको पहिलो स्थानीय चुनावमा शिवाले परीक्षण गरे आफूलाई, नवराजपुर गाउँपालिकाको प्रमुखमा । तीन सय मतले पराजित भए उनी । उनलाई हराउने उही पुरानो अनुहार थियो । जो नवराजपुर गाउँपालिकामा निरन्तर शासन चलाइरहेका थिए । उनको नाम थियो - विश्वमोहन यादव । उनी थिए - नेपाली कांग्रेसकी चर्चित नेत्री चित्रलेखा यादवका भाइ । विश्वमोहन सिनमा हुन्थे, गाविस चलाउने रिमोट हुन्थ्यो चित्रलेखाको हातमा । शिवाको असली राजनीति यही परिदृश्यबाट शुरू हुन्छ ।

सदाझैं यसपटकको स्थानीय चुनावमा पनि भाइलाई जिताउन चित्रलेखा यादवले पढेलेखेका युवायुवतीलाई करारमा जागिरको आश्वासन दिइन्, कतिपयलाई तत्काल दैनिक ज्यालादारीमा सरकारी जागिर पनि उपलब्ध गराइदिइन् । हुलाकी मार्ग पुनर्निर्माण र विस्तारको सपना फेरि बाँडिन् । किसानका समस्या समाधन गर्ने टिपोट डायरीमा फेरि टिपिन् । मन्त्री बनिसकेकी चित्रलेखाका यावत् आश्वासनले फेरि काम गऱ्यो, भाइ विश्वमोहनले फेरि चुनाव जिते । शिवाले हारे । विश्वमोहन चित्रलेखाका भाइ थिए । ५ वर्षका लागि शिवाको समाज परिवर्तनका कथा मुर्छित भयो । घरमै धान संकलन केन्द्र खोले । स्थानीय किसानको धान वीरगञ्ज, विराटनगरमा बेचेर उचित मूल्य दिलाउने अभियान चलाए । यसमा सफल पनि भए । किसानका बीच झन् लोकप्रिय भए । स्थानीय सरकारको गलत शासन व्यवस्थाको विरोध गरिरहे । विद्रोहको आवाज बुलन्द गरिरहे ।

फेरि स्थानीय तहको चुनाव आयो । कांग्रेसबाट फेरि चित्रलेखाका भाइ विश्वमोहन उठे, मधेशी जनअधिकार फोरमबाट अशोक राईको आगमनसँगै जनता समाजवादी पार्टी बनेको जसपाबाट फेरि शिवा उठे ।

शिवासँग पैसा थिएन । धान थियो । चामल थियो । उम्मेदवारी दर्ताको शुल्कसमेत सहयोगीले तिरे । यसपटक भने शिवाले जिते । सामन्तवाद ढलेको र नयाँ शक्तिका रूपमा शिवाको उदय भएको त्यो क्षणलाई नवरानपुरले उत्सवको रूपमा मनायो । गाउँपालिका प्रमुख बनेका शिवाले जनताका चाहनाबमोजिम सामन्तवादका पिल्लर भत्काउँदै गए । स्कुल हडपेर राखिएको गाउँ कार्यापालिकाको कार्यालय स्थान्तरण गरे । विकासका नयाँ मोडेल अघि सारे । जनताका सानाभन्दा साना समस्या सम्बोधन गर्दै गए । प्रतिनिधिसभा र प्रदेशसभाको चुनाव आयो । सो क्षेत्रबाट कांग्रेसबाट उठेकी चित्रलेखाले हारिन्, एमालेसँग तामेल गरेका जसपाका उम्मेदवार राजकिशोर यादवले जिते । चित्रलेखाको हार अकल्पनीय थियो । पूरा नगर्ने चित्रलेखाका पुरानै शैलीका आश्वासनले यसपटक काम गरेन । शिवउद्गारहरूले यसपटक साथ दिएनन् ।

स्थानीय तह चुनावमा भाइ विश्वमोहनको हारले रन्थनिएकी चित्रलेखा आफ्नो पनि अप्रत्यासित हारले राजनीतिक बिरासत गुमेको निश्कर्षमा पुगिन् । भोट बैंकको रूपमा रहेको जन्मथलो नवराजपुरमा शिवाको उदय चित्रलेखालाई सैह्य हुने कुरै भएन । मालपोत कार्यालयले प्रमाणित गरेको नवराजपुर गाउँपालिकाभित्रका ७१ वटा पोखरी ठेक्काको विषयलाई राजनीतिकरण गरिन् । र, भाइ विश्वमोहनको अगुवाइमा विवाद निम्त्याइन् । विवाद भिडन्तमा परिणत भयो । भिडन्त हुँदा दर्जनभन्दा बढी घाइते बनिसकेका छन् । पोखरी विवाद निम्त्याएर गाउँपालिका प्रमुख शिवालाई असफल बनाउने चित्रलेखाको खेल भयंकर रक्तपातमा परिणत हुने संकेत देखिएको छ । मन्त्री मात्रै होइन, उपसभामुख समेत बनिसकेकी चित्रलेखाले आफ्नो राजनीतिक बिरासत गुम्ने भयले पोखरी विवादको आवरणमा नवराजपुरमा निम्त्याएको रणसंग्राम भविष्यमा उनकै लागि घातक सिद्ध हुने देखिन्छ ।

*santoshbaraili@gmail.com*

## ह्याप्पी बर्थ डे संविधान

*आज संविधानको जन्म दिन । ह्याप्पी बर्ड डे संविधान ! २०७२ सालमा भूकम्प आएर हजारौं मानिस मरिरहेको बेला यो संविधानको जन्म भएको थियो । तर जसै संविधानको जन्म भयो देशमा फेरि अर्को भूकम्प आइदियो । देशभरि आन्दोलन, हाहु, नाकाबन्दीसमेत भयो । अवस्था यस्तो भइदियो कि भर्खर जन्मेको संविधान बाँच्ने हो कि होइन भन्नेसमेत शंका उठ्यो । यसरी दुःखपूर्वक जन्म भएको कारणले संविधानलाई राम्ररी खानपान गराउनसमेत सकिएन । यसले गर्दा अहिले संविधान कुपोषणको शिकार भएको छ । त्यसैले यो संविधान अहिले बिरामी छ । बिरामी भएकोले सुस्त छ । सुस्त भएकोले राम्ररी चल्न सक्दैन । राम्ररी हिँडडुल पनि गर्न सक्दैन । शायद राम्ररी हिँडडुल गर्न नसकेकै कारणले होला, अहिले संविधान त्यति बाहिर निस्केको पनि देखिँदैन । धेरै मानिस त्यस्ता छन् जसले अहिलेसम्म संविधान देखेकै छैनन् । देखुन् पनि कसरी ? कहिल्यै बाहिर आएको भए पो । अहिले त संविधान त्यही सर्वोच्च अदालतको बरण्डातिर यताउति डुलिरहेको देखिन्छ, त्यत्ति हो । त्यहाँ चाहिँ यसको नाम लिने गरिन्छ । अरुतिर यसको खास काम छैन । हिसाबले त यो शहर, गाउँ घुम्दै फिर्दै गर्नुपर्ने थियो । तर कसरी गर्छ ? कतै जान सक्ने अवस्था भए पो ! जे होस्, आज संविधानको जन्म दिन । संविधानको पूर्ण स्वस्थता र दीर्घायुको कामना गर्दै फेरि एक पटक ह्याप्पी बर्थ डे ।*

**शहरभित्र — सुरेश**

## खान नहुने औषधि

*सरकारले भर्खरै १०३ प्रकारको औषधि नखानु भनेर एउटा सूचना निकालेको छ । बजारमा खान नहुने खालको औषधि आएको भन्दै सरकारले ती औषधि नखान सूचना निकालेको रहेछ । सरकारले बजारबाट त्यस्ता औषधिहरू उन्मूलनै गर्ने अभियान पनि चलाएको छ । सरकारको सूचनाबाट थाहा हुन्छ कि अहिले बजारमा त्यस्तो पनि केही औषधि आएको छ जुन खानाले बिरामी हुन सक्छ । औषधि भनेको बिरामी निको हुनलाई खाने हो । तर हाम्रो बजारमा अहिले बिरामी बनाउने औषधि आइरहेको रहेछ ।*

*अनौठो बजार छ । हाम्रो बजारमा खानेकुरा यस्तो आइदिन्छ जसले भोक मेटाउने होइन अझ बढाइदिन्छ । डाक्टर यस्तो आइदिन्छ जसले बिरामीलाई निको होइन अझै बिरामी बनाइदिन्छ । सिंहदरवारमा यस्तो नेता आइदिन्छ जसले देश बनाउने होइन अझै बिगारिदिन्छ । देश वास्तवमै अनौठो छ ।*

*अब सरकारले औषधिमाथि प्रतिबन्ध लगाइदियो । सर्वसाधारण जनतालाई केही न केही । किनभने सरकारले अहिले जुन औषधिमाथि प्रतिबन्ध लगाइदिएको हो, जनतासँग त्यो औषधिसमेत खाने हैसियत छैन । औषधि नै खान नपाएर जनता मरिरहेका छन् । अब यस्तो अवस्थामा औषधि खाएर मर्नुभन्दा नखाएरै मरेको राम्रो हैन र ! कम से कम खर्च त बच्यो । कि कसो ?*

## तीजको दुःख

*यस पाली तीजको दर पनि बहुतै चर्चित भयो । महिला दिदी बहिनीहरूले दर खाएको देखेर पुरुष दाजुभाइहरूलाई साह्रै इर्ष्या लागेको रहेछ । त्यसैले सामाजिक सञ्जालमा दरको भिडियो खुबै आइरह्यो । कसैले भने- दर होइन दारु खाए । कसैले ह्वाङ्ग खुलेको ब्वाउजको भिडियो बनाए । कसैले फुत्तफुत्त उफ्रिँदै नाचेको भिडियो हाले । महिलामाथि व्यंग्य कस्न पाउँदा पुरुषले एउटै मौका पनि नछोड्ने रहेछ ।*

*हुन त तीजलाई पतिको घरमा एक वर्षसम्म भएको दुःख जम्मै माइतीमा आएर पोख्ने अवसर भनिन्छ । अर्थात महिलाका लागि यो दुःख पोख्ने अवसर हो । तर अहिले लागिरहेको छ, यो महिलाले दुःख पोख्ने होइन पुरुषले आफ्नो पीडा पोख्ने अवसरमा परिणत भइरहेको छ । एक वर्षसम्म पत्नीलाई केही भन्न पाएको हुँदैन, तीज आयो कि यस्ती महिला, उस्ती महिला भनी भिडियो बनाएर दुःख पोखिहाल्छन् । अरु बेला त भन्न पाउँदैनन्, तीजको बेला मौका बनाउँछन् ।*

*कतै तीजले पनि आफ्नो स्वरुप परिवर्तन गरिसकेछ कि क्या हो ?*

# के पढेर लगाउने होला कालोकोट ?

कर्मचारी छान्ने नेपालको परीक्षा प्रणाली र नियुक्ति कतिसम्म उदेकलाग्दो छ भने, उत्तीर्ण हुनेले मौका पाउँदैनन्, अनुत्तीर्ण हुनेहरू धमाधम कालोकोटमा सजिन्छन् । न्याय सेवा आयोगले पछिल्ला पाँच वर्षमा १११ जना जिल्ला न्यायाधीशका लागि विज्ञापन खोल्यो, आवेदन दिनेको संख्या १० गुणा तर उत्तीर्ण हुनेको संख्या भने मागको आधा मात्र !

०७२ सालमा नयाँ संविधान जारी भएसँगै प्रतिस्पर्धात्मक पद्धतिबाट छान्ने प्रक्रिया अघि बढाइएको हो । तर, पछिल्ला पाँच वटा परीक्षामा खुलातर्फ एक जना पनि उत्तीर्ण हुन सकेका छैनन् । आन्तरिक खुलातर्फ पास हुनेको संख्या पनि माग संख्याको आधा मात्र देखिन्छ ।

परीक्षा पार गरेर न्यायाधीश बन्न नसके पनि तिनै अयोग्य उम्मेदवार न्यायाधीशमा नियुक्त हुँदै आएका छन् । जिल्ला न्यायाधीशको पदपूर्ति गर्दा २० प्रतिशत ज्येष्ठता, योग्यता र कार्यक्षमता मूल्यांकनको आधारमा, न्याय सेवामा तीन वर्ष बिताइ सकेकाहरूमध्ये (४० प्रतिशत) आन्तरिक खुला प्रतिस्पर्धा र बाँकी ४० प्रतिशत खुलाबाट लिने व्यवस्था छ । खुलाबाट जिल्ला न्यायाधीशमा प्रतिस्पर्धा गर्न अधिवक्ताको रुपमा कम्तिमा आठ वर्ष निरन्तर काम गरेको हुनुपर्ने प्रावधान छ । ०७२ यता एउटै वरिष्ठ अधिवक्ता पास भएर न्यायाधीश हुन सकेका छैनन् । शुरु-शुरुमा अधिवक्ताले कर्मचारीका लागि मात्र बनाएको पाठ्यक्रम हो भन्ने आरोप लगाउँथे, अहिले त कर्मचारी पनि फेल हुन थाले । लोकसेवा लडेरै उत्तीर्ण भएका कर्मचारी जान्दै नजान्ने त होइनन् होला । वरिष्ठ अधिवक्ता कोही छिर्नै नसक्ने, लोकसेवा लडेर नियुक्ति खाएका उपसचिव पनि अनुत्तीर्ण हुने भनेपछि पाठ्यक्रममै केही सुधार गर्नु जरुरी रहेको अधिवक्ता ओमप्रकाश अर्याल टिप्पणी गर्छन् ।

न्याय सेवा आयोगले ०७४ सालयता १११ जिल्ला न्यायाधीशका लागि विज्ञापन खुलाइँदा लिखित परीक्षामा सहभागी १ हजार १ सय १ जनामध्ये ६९ जना मात्र उत्तीर्ण भएको तथ्यांक जनआस्थासँग सुरक्षित छ ।

हालै मात्र न्याय सेवा आयोगले आन्तरिक खुलाका लागि १५, खुलाका लागि ७, महिला २, आदिवासी/जनजाति २, मधेसी २ र दलित एक पद गरी २९ जना जिल्ला न्यायाधीशका लागि दरखास्त आह्वान गर्दा २११ जना परीक्षार्थी सहभागी थिए । तर उत्तीर्ण भएर नियुक्ति पाउने एक्ला उम्मेदवार परे, पारसमणि पोखरेल, जो भक्तपुर सरकारी वकिलको कार्यालयमा कार्यरत छन् । सोमबार आयोगले नियुक्तिका लागि प्रधानन्यायाधीशसमक्ष सिफारिस गरेको हो ।उपसचिव पोखरेलले आन्तरिक खुला र खुला दुवैतर्फको परीक्षा उत्तीर्ण गरी जिल्ला न्यायाधीशका लागि सिफारिस भएका हुन् ।

अघिल्लो आर्थिक वर्ष न्याय सेवा आयोगले १८ जिल्ला न्यायाधीशका लागि विज्ञापन खोल्यो । १९६ उम्मेदवार सहभागी थिए लिखित परीक्षामा तर उत्तीर्ण भए तीन जना मात्र । यस्तै आर्थिक वर्ष ०७७ मा २९ जिल्ला न्यायाधीशका लागि विज्ञापन खुलाई दरखास्त आह्वान हुँदा लिखित परीक्षामा सहभागी २२९ जनामध्ये २६ जना मात्र उत्तीर्ण भएको तथ्यांक आयोगले उपलब्ध गराएको छ । ०७५ सालमा आयोगले जम्मा ५ जिल्ला न्यायाधीशका लागि दरखास्त खुलाएकोमा लिखित परीक्षामा सहभागी ९२ मध्ये ८ जना उत्तीर्ण भएका थिए । ०७४ सालमा आयोगले ३० जिल्ला न्यायाधीशका लागि दरखास्त आह्वान गरेकोमा ३ सय ७३ उम्मेदवार लिखित परीक्षामा सहभागी रहेकोमध्ये ३१ जना उत्तीर्ण भएको आयोगले जनाएको छ । यसरी लिखित परीक्षामा फेल भएका उपसचिवलाई नै पछि जिल्ला न्यायाधीशमा नियुक्ति गरिँदै आएको छ । यो भनेको सिष्टमकै उपहास गरेजस्तो भएन र ?

## सेनाभित्र प्रेम काण्डको अर्को श्रृंखला

नेपाली सेनामा केही समयदेखि विवाहत्तेर सम्बन्ध, पारपाचुकेलगायत भगौडाको संख्या निकै बढेको छ । एक जना विवाहित पुरुष मेजर र अविवाहित महिला मेजरबीचको प्रेम भने संगठनभित्र कारवाहीको विषय बन्न लागेको बुझिएको छ । 'केटा मेजर, केटी पनि मेजर, केटा विवाहित,' स्रोत भन्छ, 'केटी ४६ र केटा ४४ बेसिकका हुन् । उमेरचाहिँ केटाको ३८ र केटीको ३५ हाराहारी हुनुपर्छ ।'

अहिले ती दुईको माया-प्रेमको सम्बन्धलाई लिएर मुद्दा परेको बताइन्छ । लफडा बढ्दै गएकाले दुवैको जागिर धरापमा पर्नु स्वाभाविक हो । सेवा अवधिको हिसाबले पुरुषको पेन्सन पाउने समय हुन लागेको छ भने महिला मेजरको अझै केही वर्ष बाँकी रहेको बताइन्छ ।

सेनामा यस्तो लफडा धेरै भयो नि ? भनेर राखिएको जिज्ञासामा अवकाशप्राप्त एक जना जर्नेलले बताए, 'खै किन हो जागिर हापेर हिँड्नेहरू उत्तिकै बढेका छन् । पारिवारिक लफडा झनै बढेको देखिन्छ । जागिर छाड्नेको संख्यासमेत अचाक्ली छ । वितण्डा मच्चाउनेहरू उत्तिकै देखिन्छन् । अरु त अरु एउटा ब्यारेकबाट अर्कोमा सरुवा हुनेबित्तिकै नयाँ घरजम गर्नेको बाढी नै आएको छ । खानपान र ग्लोबलाइजेसनको असर हुन सक्छ ।'

द्वन्द्वकालमा ज्यान जोगाउन भाग्थे भने अहिले ज्यान बनाउन जागिर छाड्नेको बाढी लागेको छ । ती अधिकारीका अनुसार पछिल्ला दिन अन्य क्षेत्रमा झैं सेनाभित्र सेवा शुरु गरिसकेकाले पनि विदेश जाने सोच राखेको पाइन्छ । उमेर पुगेकाहरू र पाँच वर्ष सेवा गरेकाले प्रायः युरोप, अमेरिकामा गएर राम्रो जागिर पाउन थालेपछि उनीहरूले त्यताको सपना देखेको हुन सक्छ । यस्तो प्रवृत्ति पछिल्ला दिनमा फ्रान्सतिर बढी देखिन्छ । कतिपय त रुससम्म पनि हान्निएका छन् ।

# संविधान दिवस, पदक र आममाफी

वैकुण्ठ ढकाल

असोज ३ संविधान दिवस, संविधान दिवस भन्नेबित्तिकै तपाईंको आँखाअगाडि के दृश्य आउँछ ? सार्वजनिक विद्यालय, सैनिकमञ्च टुँडिखेलमा तामझामसहितको कार्यक्रम, 'हत्या, बलात्कार, चोरी, ठगी' मुद्दा लागेका 'पहुँच'वालालाई आममाफी अनि नेता र सरकारी कर्मचारीका परिवार र आसेपासेलाई पदक घोषणा । यत्ति हो कि योभन्दा फरक केही छ ! फरक आउँछ भने तपाईं सकारात्मक सोच भएको मानिस पर्नुभयो, तपाईंको आयु अलिक लामो हुन सक्छ । संविधानसभाबाट संविधान जारी भएको आज ८ वर्ष पूरा भयो । यो बीचमा संविधान कति कार्यान्वयन भयो, कार्यान्वयनका लागि बन्नुपर्ने कानुन कति बने, संविधानले व्यवस्था गरेका विषय कति कार्यान्वयनमा गए ? त्यसको हिसाबकिताब हुँदै गर्ला । अघिल्लो वर्षभन्दा यो वर्ष संविधान दिवसमा एउटा कुराचाहिँ फरक हुने भएको छ । गत शुक्रबार बसेको मन्त्रिपरिषद् बैठकको निर्णयले फरक हुने निश्चित गरेको हो ।

सरकारले यो वर्ष संविधान दिवसको दिन मानपदवी तथा पदक वितरण नगर्ने भनेको छ । मन्त्रिपरिषद्को बैठकले विभूषण वितरण कार्य हाललाई स्थगन गर्दै यसलाई मर्यादित एवं थप व्यवस्थित गर्न अन्तर्राष्ट्रिय अभ्यास र विभूषणसम्बन्धी प्रचलित कानुनसमेतको अध्ययन गरी तीन महिनाभित्र प्रतिवेदन पेश गर्न कार्यदल बनाउने निर्णय गरेको हो । हरेक वर्ष संविधान दिवस असोज ३ को अवसर पारेर राष्ट्रको लागि योगदान गरेका व्यक्तिलाई राष्ट्रपतिले मानपदवी, अलंकार र पदक प्रदान गर्ने अभ्यास थियो । नेपाल रत्न, राष्ट्र गौरवलगायत ११ मानपदवी, राष्ट्र यशोवर्द्धक, नेपाल सेवा प्रवीणलगायतका ८ अलंकार, राष्ट्र सेवा प्रथम श्रेणी, सुकीर्ति, सगरमाथालगायत ६ प्रकारका पदक दिइन्थ्यो । यो वर्ष पनि पदक दिने काम निकै अघि बढिसकेको थियो । जिल्ला प्रशासन कार्यालय, मन्त्रालयहरूले नाम सिफारिस गरिसकेका थिए । आएको नामलाई छरितो बनाउने कि भन्ने छलफल पनि भएको हो । तर, अघिल्लो पटकभन्दा उल्लेख्य सुधार गर्न सक्ने नदेखेपछि उपप्रधान एवं गृहमन्त्री नारायणकाजी श्रेष्ठले मापदण्ड बनाएर मात्र विभूषण दिन छलफल अघि बढाए । प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डलाई भेटेर त्यही प्रस्ताव राखेका थिए । प्रक्रिया अगाडि बढिसकेकाले कसरी रोक्ने भन्दै प्रधानमन्त्रीले गठबन्धनमा छलफल गर्नुपर्ने बताए ।

गृहमन्त्री श्रेष्ठले मापदण्ड बनाएर मात्र विभूषण दिनु उपयुक्त हुने अडान लिएपछि शुक्रबार बालुवाटारमा छलफल भयो । प्रधानमन्त्री, रक्षामन्त्री र गृहमन्त्रीका साथै कांग्रेस सभापति शेरबहादुर देउवासमेत सहभागी छलफलमा यो पटक पदक वितरण नगर्ने र मापदण्ड बनाउन कार्यदल गठन गर्ने सहमति जुट्यो । त्यसअनुसार शुक्रबार साँझ बसेको बैठकले यो वर्ष विभूषण वितरण नगर्ने र कार्यदल बनाउने निर्णय गऱ्यो । अब बस्ने मन्त्रिपरिषद्को बैठकले कार्यदल बनाउनेछ ।

विभूषणको संख्या मनोमानी रूपमा थप्ने प्रवृत्ति बढेपछि २०७७ असार २ गते मन्त्रिपरिषद्ले नियमावली-२०६५ संशोधन गर्दै एक वर्षमा २ सय जनालाई मात्र विभूषण दिने निर्णय गऱ्यो । त्यो बेला हरेक वर्ष मानपदवी एक सय तथा अलंकार र पदक ५०-५० जनालाई दिने निर्णय भएको २ महिनामै तत्कालीन प्रधानमन्त्री केपी शर्मा ओलीको मन्त्रिपरिषद्ले विभूषणमा कोटा राख्ने प्रावधान हटायो । मन्त्रिपरिषद्ले नियमावली संशोधन गरेर 'सरकारले निर्धारण गरेको संख्यामा विभूषण दिने' तजबिजी प्रावधान राख्यो । त्यही गलत अभ्यासलाई त्यसपछिका सरकारले पनि निरन्तरता दिँदै आए । यसले विभूषण पाउनेको संख्या बढ्दै गयो भने खर्च पनि बढाइरहेको छ ।

विभूषण ऐन, २०६४ र नियमावली, २०६५ जारी भएको छ । ऐनमा भनिएको छ, 'राष्ट्रिय जीवनका विभिन्न क्षेत्रमा विशिष्ट योगदान पुऱ्याउने महानुभावलाई मुलुकका तर्फबाट कदर तथा सम्मानस्वरूप मानपदवी, अलंकार तथा पदकजस्ता विभूषण प्रदान गर्ने व्यवस्थामा समयानुकूल व्यवस्था गर्न वाञ्छनीय भएकोले ।' यसले मानपदवी, अलंकार र पदक राष्ट्रिय जीवनका विभिन्न क्षेत्रमा विशिष्ट योगदान पुऱ्याउनेलाई दिइने हो भन्ने प्रष्ट हुन्छ । ऐनको परिच्छेद २ मा 'विभूषण प्रदान गर्ने प्रक्रिया' अन्तर्गत ३ (१) मा 'नेपाल सरकारले राष्ट्रिय जीवनका राजनीतिक, आर्थिक, सामाजिक, साँस्कृतिक, अन्वेषणात्मकलगायत क्षेत्रमा वा अन्तर्राष्ट्रिय क्षेत्रमा विशिष्ट योगदान पुऱ्याउने नेपाली नागरिकलाई समितिको सिफारिसमा यस ऐनबमोजिम विभूषण प्रदान गर्न सक्नेछ' भनिएको छ । यसरी नै ऐनको दफा ६ मा 'विभूषण सिफारिसका आधार' अन्तर्गत

क. राष्ट्रको गौरव वृद्धि गर्ने कार्यमा विशेष योगदान पुऱ्याएको
ख. आफ्नो क्षेत्रमा उत्कृष्ट काम गरी राष्ट्रलाई योगदान पुऱ्याएको
ग. सरकारी सेवासँग सम्बन्धित व्यक्तिको हकमा आफूलाई तोकिएको काम प्रशंसनीय रूपमा सम्पादन गरेको

**कहाँबाट धर्मनिरपेक्षता थपियो, स्वयम् नेम्वाङका आत्मकथा आएको भए नेपाली जनताले थाहा पाउने थिए होलान्, त्यो पाटो पनि मंगलबारको कालो रातले बन्द गरेको छ ।**

घ. विदेशी नागरिक भए नेपालको समुन्नति तथा अन्तर्राष्ट्रिय क्षेत्रमासम्मान बढाउने कार्यमा विशेष योगदान पुऱ्याएको
ङ. कुनै साहसी वा बुद्धिमत्तापूर्ण काम गरी सार्वजनिक हितको लागि विशेष योगदान पुऱ्याएको
च. तोकिएको अन्य आधार पूरा गरेको हुनुपर्ने भनिएको छ ।

यी व्यवस्था हेरेपछि र विगतका पदक पाउनेहरूको अनुहार एक पटक सम्झने प्रयास गर्नुस् त, मापदण्डअनुसार पदक पाउनुपर्नेले पाएजस्तो लाग्छ त ? अपवादलाई छाडेर हेर्ने हो भने पदक पाउनुपर्नेले नपाएको र नपाउनुपर्नेले पाएको जो-कोहीले सहजै भन्न सक्छ । त्यसो त विभूषण सिफारिस गर्नका लागि समिति नै गठन गरिएको हुन्छ । समितिले सरकारलाई विभूषण पाउने व्यक्तिको नाम सिफारिस गर्छ । मन्त्रिपरिषद्ले विभूषण पाउने व्यक्तिको नाम स्वीकृत गर्छ ।

**विभूषण समितिमा को-को रहने व्यवस्था छ ?**

वरिष्ठ उपप्रधानमन्त्री वा निज नरहेको अवस्थामा मन्त्रिपरिषद्को वरिष्ठ मन्त्री - अध्यक्ष,

गृहमन्त्री- सदस्य,

राष्ट्रिय जीवनमा उल्लेखनीय योगदान पुऱ्याएका व्यक्तिमध्येबाट समावेशी सिद्धान्तको आधारमा मन्त्रिपरिषद्ले तोकेको महिलासहित ६ जना - सदस्य,

गृहसचिव - सदस्य सचिव ।

समितिले अवश्यकताअनुसार उपसमिति गठन गर्न सक्ने ।

यही संरचनाका आधारमा गठित समितिको सिफारिसका आधारमा पछिल्लो १३ वर्षमा वितरण गरिएको विभूषण र पदकको संख्या हेरौं एक पटक :

**कुन वर्ष कति पदक ?**

| | |
|---|---|
| २०६७ साल | २६९ |
| २०६८ | (संविधानसभा विघटन र त्यसबाट सिर्जित राजनीतिक समस्याले पदक नबाँडिएको) |
| २०६९ | १६४ |
| २०७० | १८९ |
| २०७१ | ३२६ |
| २०७२ | (विनाशकारी भूकम्पका कारण विभूषण घोषणा नगरिएको) |
| २०७३ | ३७० |
| २०७४ | ४९८ |
| २०७५ | ५१८ |
| २०७६ | ६३३ |
| २०७७ | ५९३ |
| २०७८ | ८८७ |
| २०७९ | ८८२ |
| २०८० | मापदण्ड बनाएर बाँड्ने मन्त्रिपरिषद्को निर्णय । |

विभूषण ऐन, २०६४ र नियमावली, २०६५ को आफू अनूकुल व्याख्या र सिफारिस समितिको संरचनाले नै विभूषण र पदकमा दलीय गन्ध ह्वास्सै आउने गरेको छ । अहिले पनि पदक छनोटमा नातावाद र कृपावाद हावी हुने गरेको छ । अहिले विभूषित गर्ने नाममा राज्यले दिने पदककै अपमान गर्ने गरी राज्यको सम्मानलाई समेत सस्तो बनाएर सम्मानको समेत खिल्ली उडाउन थालिएको छ । विभूषण र पदकको निष्पक्ष वितरण नभएको मात्रै हैन यसले राज्यको ढुकुटीमा पनि अनावश्यक आर्थिक भार थोपरिरहेको छ । पछिल्लो पाँच वर्षमा सरकारले विभूषणमा गरेको खर्चको विवरण पनि हेरौं एक पटक :

**पदकमा कुन वर्ष कति खर्च ?**

२०७५ साल- ५ करोड ६९ लाख ७७ हजार
२०७६ साल- ८ करोड ५० लाख
२०७७ साल-१० करोड २२ लाख १६ हजार
२०७८ साल-१९ करोड ७२ लाख ५१ हजार
२०७९ साल- करिब १५ करोड

पछिल्ला ११ वर्ष (१३ मध्ये दुई वर्षमा नबाँडिएकाले) विभिन्न पेशा व्यवसायमा आबद्ध रहेर देश र जनताका लागि योगदान गर्ने केही व्यक्तिलाई अपवाद ठान्ने हो भने विभूषण पाउनेमा सत्तारूढ दलका नेता-कार्यकर्ता, आसेपासे र स्वार्थ समूह तथा शक्तिकेन्द्र निकटकै दबदबा देखिन्छ । हुन त पदक पाउनेमा सार्वजनिक भएका कतिपयले पदक अस्वीकार गरेको पनि सुनिन्छ । पदक र विभूषणको अपमान हुने गरी पदक बाँड्नुभन्दा स्थगन गर्नु नै ठीक होला । अब संविधान दिवसका दिन माफी मिनाहका नाममा गम्भीर प्रकृतिका अपराधमा संलग्नलाई उन्मुक्ति दिने काम पनि रोकिनुपर्छ । यस्ता कामले संविधान दिवसको सम्मान हैन अपमान भइरहेको छ ।

# क्रमशः हामी कहाँ गइरहेका छौँ ?

श्याम रिमाल

*बिहानीको शीतको थोपा, कृष्ण कृष्ण भन्छ*
*राजै श्याम श्याम भन्छ*
*तर यो कलिकालमा राम बोल्यो मैनाले, मान्छेले बोल्दैन* (राजु अधिकारी)

पत्रिका हेर्दा, पढ्दा हरेक दिन स्थानीय तहका एक न एक प्रशासकीय अधिकृत वा कर्मचारीमाथि उपभोक्ता वा सेवाग्राही वा ठेकेदारहरूसँग घुस लिएको अभियोगमा अख्तियारले मुद्दा दायर गरेकै हुन्छ । तीनै तहका प्रमुख वा उपप्रमुख पनि भ्रष्टाचार वा अनियमितता केसमा परी बेपत्ता भएका हुन्छन् । जनप्रतिनिधि नै हत्या, हिंसाका केसमा मुद्दा परी हिरासतमा लिइँदै छन्, कतिपय फरार छन् । महोत्तरीका लक्ष्मी कोइरी, रौतहटका मोहम्मद आलम मात्र होइन, मुलुककै राजनीतिक खेलाडी विजयकुमार गच्छदार पनि त्यस्तै मुद्दा झेलिरहेका हुन्छन् ।

बाटामा हिँडिरहेकाहरूको गहना वा अन्य सामान चोर्ने घटना त बाबुले छोरीलाई बलात्कार वा यौनशोषण गर्ने, पैसाका लागि छोरा । नातिले बाबु वा आमा वा हजुरबा, हजुरआमा मार्ने घटनाका अगाडि बाउन्ने हुन थाले । एक्लै हिँडेका अवस्थामा वा मेलापर्वमा रमाउँदै गरेका बालिका, किशोरी, महिला पनि बलात्कारका सिकार हुन लागे । विदेशका नर्ककुण्डमा आफ्नै चेलीबेटीलाई बेच्नेहरू त धेरैअघिदेखि नै सक्रिय थिए र अझै छन् । मानिसमा सहनशीलता घट्दै शून्य हुन थाल्यो र एकै छिनको आवेगमा अर्कामाथि हतियार उज्याई प्रहार गर्ने त कति कति ? पूर्वतिर पहिले पहिले चार आमल काटेको ख्याल ख्याल भन्थे । अब सार्वजनिकस्थलमा कसैले आफ्नो विचार वा सोचाइविरुद्ध राजनीतिकर्मीमाथि हत्या गर्ने नियतले नै खुकुरी छप्काउने घटना भर्खरै राजधानीमा भएको छ । त्यसअघि महानगरपालिकाका पिताले पत्नी प्रकरणमा सङ्घीय सरकारलाई चोरको संज्ञा दिँदै सिंहदरबारमा आगो लगाउनेसम्मको धम्की दिए । धरानमा आफूलाई प्रश्न सोध्नेविरुद्ध त्यहाँका अर्का नगरपिताले एक सर्वसाधारणलाई प्रहरीद्वारा पक्राउन लगाए ।

कलाकार, पत्रकार, किशोरकिशोरीहरू ब्रेकअप भई डिप्रेसनमा परेर आत्महत्यातर्फ प्रवृत्त हुँदै छन् । छिमेकी भारतमा ऋणको पासामा परेका किसानहरूले आत्महत्या गरेका समाचारहरू आइरहेका बेला यहाँ पनि भूकम्प वा महामारी वा आर्थिक शिथिलताले बिजनेस घाटामा परी त्यस्तो मृत्यु रोज्न व्यापारीहरू पनि उद्यत हुन थाले ।

सडकमा एक सवारी साधनले अर्कालाई अलिकति छोयो भने मात्र पनि दुवै चालक ओर्लेर सडकमा बाझाबाझ गर्ने तथा एकले अर्कालाई पैसा तिराउने प्रवृत्ति पनि त्यत्तिकै छ । भर्खरै सर्लाहीको मलङ्गवामा कृष्णको मूर्ति सेलाउने विवादमा पनि झडप भई कर्फ्यु नै लगाउनुपऱ्यो । त्यस्तै घटना केही वर्षअघि कपिलवस्तुमा भयो जहाँ दुर्गाको मूर्ति सेलाउन जाने बाटाका विषयमा हिंसा भड्केको थियो । धरानमा भर्खरै गोरुको मासु काटेर खाएको घटनाले झण्डै ठूलो हिंसाको वारदात हुन थालेको थियो । पहिचानवादी र अपहिचानवादी प्रदेशसभा सदस्यबीच मतदान हुँदा कोशी प्रदेश नाम चाहनेका पक्षमा बहुमत पुगेपछि पहिचानवादी मर्माहित भए । यसबाट पूर्व क्षेत्रमा महिनौँ दिनसम्म नै आन्दोलन चलिरहेको छ र एकले अर्कालाई बहिष्कार गर्ने, जमिनमै टेक्न नदिने घटना भई त्यसैको रापतापले प्रदेश सरकारका मुख्यमन्त्री नै फेरिरहने काम भइरहेको छ । त्यसो त एकले अर्कालाई नसहने वा अहं प्रवृत्तिले संसद् अधिवेशनका बैठक नै लामो समयसम्म अवरुद्ध भई थुप्रै महत्त्वपूर्ण विधेयक थन्केर बसेका छन् । आफूभन्दा फरक खालकासँग समझदारीको अभाव, डर तथा एकापसमा विश्वासको कमीले सहिष्णु व्यवहार घट्दै छ । रुढिवादिता, मिथ्या सूचना, साँघुरो मानसिकता पनि अहिष्णुताका कारण हुन् । यसले मानिसमा समानता, विभेदरहितता, स्वतन्त्रता र अन्य सामाजिक अधिकार प्रयोग गर्न दिँदैन । जात, संस्कृति, लैंगिक, धर्म र अन्य सहन नसकिने भइरहेका अभ्यासले पनि असहिष्णुता जन्माइरहेको छ ।

यस्ता प्रवृत्ति र अभ्यास त 'महाभारत', 'रामायण' लगायत धर्मग्रन्थबाट पो मानिसले सिके कि ? जर्मनीका शासक हिटलर 'गीता' बाट प्रेरित भई युद्धपिपासु बनेको कुरा विश्वेश्वरप्रसाद कोइरालाले आफ्नो 'हिटलर र युद्ध' उपन्यासमा देखाएका छन् । 'गीता'मा कृष्णले अर्जुनलाई युद्ध गर्न प्रेरित गरेको कुराले आफूलाई छोएको भन्ने भनाइ हिटलर पाइएको उपन्यासमा देखाइएको छ । दुर्योधनको अभिमान र द्रौपदीको बदलाको भावनाले महाभारत युद्ध नै चल्यो । 'रामायण' मा पनि रामले थुप्रै राक्षसहरू मारेको र अन्त्यमा युद्धबाट नै रावणलाई पराजित गरेकाले त्यही सिको सिक्दै मानिस आफ्नो कथित गर्वले उत्तेजित भएर पनि युद्धकर्म, झगडा, लडाइँमा लागे कि ? तत्कालीन नेकपा (माओवादी) को जनयुद्ध र मधेसवादी दलहरूले गरेको आन्दोलन, पृथकतावादीको अभियान धार्मिक ग्रन्थ र तिनमा लेखिएका अनेक पुराण कथाअन्तर्गत रहेका बदला र अभिमानका भावनाका प्रसंगले पनि मानिसले अर्काप्रति वैरत्व राख्ने गर्छ कि ?

बुद्ध, गान्धी, महावीरलगायत अनेक ऋषि, सन्त, स्वामीहरू जन्मिरहेका छन्, नैतिकता र सत्कर्मका उपदेश दिइरहेका छन् । तैपनि हत्याहिंसा बढ्दो नै छ, किन ? साहित्यकार तथा पत्रकार रत्ननिधि शुक्राचार्य भन्थे, 'शान्ति र अहिंसाका कुरा पनि चल्दै जान्छ, अपराधकर्म र मानवविरोधी पनि हुँदै गर्छ, बुद्ध र गान्धीका उपदेश नहुँदो हो त यसभन्दा अझ बढी उपद्रव हुन्थे होलान् ।' अब त समाजले मानेका अनेक स्वामी, पुजारी, गुरु, नवबुद्ध भनिएकाहरू नै बलात्कार, यौनहिंसा, शोषणमा लागेका केसहरू देखिँदै, सुनिँदै आएका छन् । कलि लागेको भन्छन् मानिसहरू । पशुपतिनाथका विरूपाक्षलाई जति पानी दिए पनि माथि उठ्न सकेको छैन । अदालतहरू पनि त्यस्तै कुकर्मीहरूलाई पो जिताउन लागेका थुप्रै उदाहरण छन् । साँच्चै हामी कता गइरहेका छौँ हँ ?

# जीवनमा सुवास नेम्वाङका यी दुई गुनासा

राजनीतिमा लागेपछि कहिल्यै पछि फर्केर हेर्नुपरेन सुवासचन्द्र नेम्वाङले । नेपाली राजनीतिमा सहकार्य, सहमतिको मानक शालिन र भद्र नेताको महाप्रस्थान पनि राजनीतिक ग्राफ उकालो लागिरहेका बेला त्यसरी नै शान्त ढंगले भयो । भदौ २६ गते हृदयाघातका कारण नेम्वाङको निधनले मुलुकलाई नै शोकमा डुबायो । जति पटक निर्वाचनमा होमिए पनि फूलमाला र अबिर पहिऱ्याएर पठाएका इलामे भने एक असल अभिभावक गुमाएको पीडाले रन्थनिइरहेका छन् ।

नेम्वाङको निधनमा मुलुक नै शोकाकूल बन्नुमा उनले मुलुकका लागि गरेको योगदान र सबै दलका सबै नेतासँगको सहकार्य नै हो । शालिन, भद्र र बौद्धिक नेताको छवि बनाएका नेम्वाङ कुनै दल विशेषको भन्दा पनि साझा नेताको रूपमा स्वीकार्य थिए । यसर्थ उनको विकासे नेताको छवि भने ओझेलमा परेको छ । ०५६ सालको निर्वाचनमा इलामको कर्णाली भनेर चिनिने पश्चिमी क्षेत्रलाई रोजे ।

जतिखेर उनी त्यो क्षेत्रमा निर्वाचन लड्न जाँदै थिए, त्यो बेला एउटा बिजुलीको बल्बसमेत कहींकतै झुण्डिएको थिएन । नेम्वाङले केही नगरेको आक्षेप लगाउनेहरूसँग उनी गुनासो गर्ने गर्थे, 'त्यस्तो अवस्थाबाट यो अवस्थामा ल्याउनका लागि कति पहलकदमी गरें हुँला ?' हुन पनि विकासको हिसाबले विगतको तुलनामा जिल्लाको पश्चिमी क्षेत्र निकै अघि छ । तुलनात्मक रूपले दुर्गम मानिने यस क्षेत्रमा ठूला सडक योजना सञ्चालित छन् । केही भने सम्पन्न भइसकेका छन् ।

नेम्वाङ फरक विचार राख्ने र आफ्नो आलोचकप्रति नरम त थिए नै, निर्वाचनमा होमिएको बेला आफ्नो प्रतिद्वन्द्वीलाई समेत कहिल्यै आलोचना गर्थेनन् । अरुको आलोचना गर्न रुचि नदेखाउने उनी आफैंले गरेको कामको जस लिने कुरामा पनि खास जाँगर चलाउँदैन थिए । इलाम निर्वाचन क्षेत्र नं. २ बाट निरन्तर निर्वाचन जित्दै आएका उनले ठुल्ठूला विकासे योजना भित्र्याएका थिए । आफ्नै पहलमा योजना ल्याए पनि जस लिनका लागि शिलान्यास र उद्घाटनमा खासै रुचि नदेखाउने उनीप्रति केही व्यक्तिले विकास निर्माणमा चासो नलिएको मात्र होइन, केही नगरेकोसम्म आरोप लगाउने गरेका थिए । यस्तो बेला उनले आफूले गरेको काम पार्टीले तल्लो तहसम्म प्रचार नगरेको भनी गुनासो गर्थे । 'मैले गरेको काम पार्टीले गरेको हो, यसैले पार्टीले सर्वसाधारणलाई बुझाउन सक्नु पर्थ्यो,' उनी गुनासो गर्थे ।

नेम्वाङको पार्टीसँग अर्को एउटा ठूलो गुनासो थियो, एमालेले संविधान निर्माणको अपनत्व ग्रहण गर्न कञ्जुस्याइँ गऱ्यो । २०७२ साल असोज ३ गते संविधान जारी हुँदै गर्दा देशी विदेशीको दबाव र प्रभाव थेगिनसक्नु थियो । तत्कालीन राष्ट्रपति डा.रामवरण यादव स्वयं पनि तत्काल संविधान जारी गर्ने पक्षमा थिएनन् । संविधान जारी गर्नका लागि संविधानसभा अध्यक्षको हैसियतले राष्ट्रपति यादवलाई निम्तो दिन जाँदा सकारात्मक जवाफ नपाएपछि संविधान, संविधानसभाका अध्यक्षले जारी गर्न सक्ने कानुनी प्रावधान सुनाएर, संविधानसभामा यहाँलाई स्वागत गर्नेछु भनी फर्केका थिए । नेम्वाङले सुनाउने गर्थे, 'यसरी छुट्टिएका थियौं हामी, अन्ततः राष्ट्रपति आए र संविधान जारी भयो ।'

आफूले संविधान जारी नगर्न आएको दबाव र प्रभावलाई पर्वाह नगरी समन्वय र सहकार्य गर्दै आफ्नो नेतृत्वमा जारी भएको संविधान निर्माणको अपनत्व ग्रहण गर्न एमालेले कञ्जुस्याइँ गरेको उनको गुनासो थियो । आफ्नो नेतृत्वमा संविधान निर्माण भएकाले एमालेले त्यसको प्रचारसँगै संविधान दिवसमा उत्सव मनाओस् भन्ने चाहन्थे नेम्वाङ ।

**योजना हेर्ने अधुरो सपना**

नेम्वाङ कानुन र संविधानको ज्ञाता मात्र होइन, विकास निर्माणको हिसाबले पनि उत्तिकै दूरदर्शी थिए । नेम्वाङकै अगुवाइमा विद्युतीय मार्ग निर्माण भयो । यसले गर्दा पूर्वी पहाडी जिल्लामा विद्युत् उत्पादन गृह च्याउ सरी निर्माण भए । भइरहेका छन् । इलामको धार्मिक तथा पर्यटकीयस्थल माईपोखरीलाई रामसार क्षेत्रमा सूचीकृत गराउनका लागि उनको भूमिका रह्यो । इलामको पश्चिमी क्षेत्रसँगै पाँचथर जिल्लालाई समेत लाभान्वित हुने दमक रवि सडक, राँके रवि भेडेटार अर्बौंको सडक निर्माणका लागि पहलकदमी लिए । ठेकेदारले सोचेजसरी काम गरेनन् । यसरी नै नेम्वाङकै पहलमा इलाम र झापा फास्ट ट्र्याक, बेलासे मार्गको काम ५५ करोडभन्दा बढीमा ठेक्का लागे पनि काम ढिलाइ हुँदा यी योजना सम्पन्न गर्ने सपना भने अधुरै रह्यो ।

## उनका उत्तराधिकारी बन्लान् त सुहाङ ?

*इलाम निर्वाचन क्षेत्र २ का प्रतिनिधिसभा सदस्य सुवासचन्द्र नेम्वाङको भदौ २६ गते निधन भएसँगै यो क्षेत्रको सांसद पद रिक्त बनेको छ । नेम्वाङको भर्खरै मात्र शुद्ध्याइँ (फजे) सकिएको छ । प्रतिनिधिसभालाई सभामुख देवराज घिमिरेले सो क्षेत्रको सांसद पद रिक्त भएको जानकारी गराएसँगै यहाँको निर्वाचन र उम्मेदवारबारे चर्चा शुरु भएको हो ।*

*०५६ सालदेखि नेम्वाङले निरन्तर विजय हासिल गर्दै आएका थिए । निधनपछि उनको कार्यभार पूरा गर्न कान्छा छोरा सुहाङलाई उम्मेदवार बनाइनुपर्ने बताउन थालिएको छ । राजनीतिमा त्यति सक्रिय नभए पनि बाबुजस्तै अधिवक्ता बनेका सुहाङ सुवासको उपयुक्त उत्तराधिकारी बन्न सक्ने तर्क गर्ने गरिएको छ । बाबुको बिँडो थाम्न सुहाङलाई उत्तराधिकारी बनाइनुपर्ने विचार पनि व्यक्त भइरहेका छन् । 'बाबुजस्तै शालिन सुहाङलाई पिताको बाँकी कार्यभार पूरा गर्ने जिम्मेवारी दिएर जानुपर्छ' एमालेका एक जिल्ला नेताले भने । हिजो सुवासचन्द्र नेम्वाङलाई पनि पार्टीको तल्लो तहबाट संगठित नभई कानुन अध्ययन गर्दा गर्दै राजनीतिमा प्रवेश गराइएको थियो । नेम्वाङकै जस्तो सम्भावना र क्षमता सुहाङमा पनि देख्न थालिएको छ । सुहाङले बाबुको बाँकी कार्यभार पूरा गर्न पार्टीले विश्वास र वातावरण बनाइदिने प्रतिक्रिया दिएका छन् । यसले सुहाङमा पनि राजनीतिमा प्रवेश गर्ने सुषुप्त चाहना रहेको अड्कल गरिएको छ ।*

*हुन त बाहिर खुलेर टिकटको लबिङमा नलागे पनि आकांक्षी भने आधा दर्जनभन्दा धेरै देखिन्छन् । विगतमा नेम्वाङ राष्ट्रपति बन्ने र उपनिर्वाचन हुने चर्चा हुँदै गर्दा पनि उम्मेदवार बन्न यहाँका केही नेता आन्तरिक खेलकुदमा लागेका थिए । अहिले पनि एमाले उपाध्यक्ष उदय राई, प्रदेश सदस्य गणेश बराल, युवा नेता बुद्धि खनाल र रविन्द्र सुवेदीको चर्चा चलिरहेको छ । यता नेपाली कांग्रेसबाट भने २०७९ को निर्वाचनमा नेम्वाङसँग १ सय १४ मतले पराजित डम्बर खड्का नै पुनः उठ्ने चर्चा छ ।*

# झोला किन्न नसक्दा टाउकोमै किताब

गरिबीका कारण धादिङको महाभारत श्रृंखला क्षेत्रका विद्यार्थी टाउकोमै किताब-कापी बोक्न बाध्य छन् । झोला किन्ने पैसा नहुँदा यस्तो अवस्था आइलागेको हो ।

गजुरी गाउँपालिका-४ को गैरीगाउँ माध्यमिक विद्यालयका अधिकांश विद्यार्थीसँग किताब-कापी बोक्ने झोला छैन । जसकारण सानादेखि ठूला अधिकांश विद्यार्थी किताब कापी प्रायः टाउको र हातमै बोकेर विद्यालय जाने/आउने गर्छन् । स्थानीय शिक्षिका निरु चेपाङ भन्छिन्- 'अभिभावकको आर्थिक अवस्था कमजोर हुँदा विद्यार्थीलाई किताब बोक्ने झोला किनिदिन सक्दैनन्, सधैँ हात र टाउकोमा किताब कापी बोकेर पढ्न स्कूल आउनु यहाँका विद्यार्थीको बाध्यता हो ।' दिनहुँ यसरी झोलाबिना किताब कापी बोक्दा च्यात्तिने, हिलो धुलोमा खस्ने समस्याले विद्यार्थी आजित छन् । पैसा नहुँदा आफूहरूले झोला किन्न नसकेको कक्षा सातमा अध्ययनरत विद्यार्थी सुविना चेपाङले बताइन् । 'घरमा झोला छैन, दुई वर्षअघि डोको बेचेर किनेको एउटा झोला ६ महिनामै च्यातियो, फेरि किन्ने पैसा छैन', सुविनाले भनिन्, 'किताब कापी बोकेर दिनमा दुई घण्टा ओरालो-उकालो हिँड्नुपर्छ, वर्षमा दुई वटा झोला किन्न सक्ने अवस्थै छैन त्यसैले प्रायः सबैले टाउको र हातमै किताब बोक्छन् ।'

नेवारबासका विद्यार्थीलाई घरबाट विद्यालय पुग्न एक घण्टा ओरालो झर्नुपर्छ । विद्यालयबाट उकालो हिँडेर घर पुग्न अझ बढी समय लाग्छ । 'ओरालो उकालो बाटो किताब कापी जोगाएर बोक्न साह्रै गाह्रो हुन्छ, झोला भए सजिलो हुन्थ्यो, झोला किन्न बुबा-आमासँग पनि पैसा छैन', सुविनाले सुनाइन् । गजुरी गाउँपालिका-५ को डोलभञ्ज्याङ माध्यमिक विद्यालयसहित महाभारत श्रृंखला क्षेत्रका अधिकांश विद्यार्थीले टाउकोमै किताब बोक्छन् । कतिपय अविभावकको घरको आर्थिक अवस्था कमजोर भएका कारण अभिभावकले चप्पलसमेत किन्न नसक्ने भएकाले विद्यार्थी खाली खुट्टै विद्यालय आउने गरेको स्थानीय अगुवा प्रमोद रूपाखेतीको भनाइ छ ।



## विश्वको सेरोफेरो



जीवन डाँगी

# भूकम्पले भत्काएको २५ वर्षे केटाको सपना

विनाशकारी भूकम्पले मोरक्कोसँगै भत्कायो २५ वर्षीय ओमर ऐत माबारेकको 'एउटा सपना' । महिना दिनपछि बिहे गर्न लागेका उनी हिजोआज एकोहोरो टोलाइरहेका छन् । उनी दुःखी छन्, तनावै-तनावमा बाँचिरहेका छन् । 'मन पराएकी प्रेमिकालाई पत्नी बनाउने सपना देखेका' ओमर पीडा छल्न मोबाइलतिर हेर्छन्, क्षणभरमै आँशु खसाल्छन् ।

गत शुक्रबार राति मोरक्कोमा भूकम्प आउनु केही मीनेटअघि ओमर आफ्नी प्रेमिकासँग फोनमा कुरा गरिरहेका थिए, त्यहीबेला 'मुटु हल्लाउने' ठूलो कम्पन आयो । र, फोनमा भाँडो खसेको आवाज सुने । त्यसपछि फोन काटियो । भूकम्पले बेस्सरी हल्लाएपछि उनी पनि बाटोमा निस्किए । त्यतिखेर मानिसहरूबीच भागाभाग मच्चियो । जमिन फाट्दैथियो, घर भत्किँदै थिए । ओमरको सपना बिग्रिँदै गयो र मनमा त्रास फैलियो । उनले चार घण्टापछि 'मीना ऐत बिही' बितेको खबर सुने ।

मीना र ओमर प्रेमी-प्रेमिका थिए, वैवाहिक बन्धनमा बाँधिँदै थिए । ओमरकी पत्नी बन्दै थिइन् मीना । तर उनलाई ओमरले घर भित्र्याउनुअघि नै भूकम्पले लग्यो ।

ओमर पुराना दिन सम्झिएर रोइरहेका छन्, मीनाको शव गाडिएको खाल्डो हेरेर टोलाइरहेका छन् । आँशुले भरिएका 'राता आँखा'ले भूकम्पपछिको पीडा दर्शाइरहेका छन् । 'भूकम्पले मोरक्को भत्कायो । तिख्त गाउँ भत्कायो । मेरो बिहे गर्ने सपना भत्कायो । गन्न नसकिने गरी मानिसको मृत्यु भयो,' ओमरले भने ।

**'चिहान बन्यो तिख्त गाउँ'**

एउटा सुन्दर गाउँ थियो- तिख्त । अहिले त्यो गाउँलाई शक्तिशाली भूकम्पले भत्काएको छ । उद्धारकर्ताहरू तिख्त गाउँको भग्नावशेषबाट एक महिलाको शव निकाल्न संघर्षरत थिए । तर, यो काम निकै चुनौतीपूर्ण थियो । भूकम्पले ढलेका घरमुनि कैयौँ मानिस चेपिएका छन् । उनीहरू धेरैको मृत्यु भइसकेको छ । अहिले शव निकालिँदै छ । उत्तर अफ्रिकी देश मोरक्कोमा गएको भूकम्प ६ दशकयताकै सबैभन्दा घातक थियो । समाचार एजेन्सीसँग २५ वर्षीय ओमारले आफ्नी प्रेमिकालाई कम्बलमा बेरेर चिहानमा लगिएको बताए, जहाँ अन्य ६८ जनाको शव पहिल्यै राखिएको थियो । उद्धारकर्ताले मीनाको शव भग्नावशेषबाट निकाल्दा उनको साथबाट एउटा मोबाइल पनि फेला परेको थियो, जुन अहिले ओमरसँगै छ ।



**मीनाको न्यास्रो मेट्न बेलाबेला त्यो मोबाइल चलाउँछन् ओमर । तर हप्ता दिनअघि सँगसँगै घुमघाम गरेको सम्झिएर भक्कानिन्छन् उनी ।**

मीनाको न्यास्रो मेट्न बेलाबेला त्यो मोबाइल चलाउँछन् ओमर । तर हप्ता दिनअघि सँगसँगै घुमघाम गरेको सम्झिएर भक्कानिन्छन् उनी । भूकम्पले थलिएको छ, मोरक्को । अनि सुनसान र मरिसकेको छ- तिख्त गाउँ । पहिले तिख्त गाउँमा कम्तीमा सय परिवारको बस्ती थियो । अहिले गाउँ भग्नावशेष छ, सग्ला छैनन् घरहरू । भत्किएका छन् बाटोघाटो । ढुंगा-इँटा, भाँचिएका काठ, लुगाफाटो र जुत्ता नराम्रोसँग छरिएका छन् । ३३ वर्षीय मोहसिन अक्सुमले समाचार एजेन्सीसँग भने, 'यहाँको जीवन समाप्त भइसक्यो, अब यो गाउँ मरिसक्यो ।'

तिख्त गाउँका अधिकांश घर माटोले बनेका थिए । भूकम्पको शक्तिशाली धक्काले सबै घर एकैसाथ भत्किए । 'यो एउटा सानो गाउँ थियो, सुन्दर थियो । मानिसहरूले घर बनाउँदा विनाशकारी भूकम्पबारे सोचेनन् तर अहिले गाउँका धेरै सदस्य गुमायौँ,' २३ वर्षीय विद्यार्थी अब्देलरहमान एडजलले भने ।

# किर्ते कागजमा जापान उडाउन खोज्दा

नक्कली कागजात पेश गरेर जापानको भिसा लगाउने म्यानपावर कम्पनीलाई सरकारी संयन्त्रले नै जोगाएको खुलेको छ । वैदेशिक रोजगार विभागका निर्देशक कविराज उप्रेतीमाथि गैरकानुनी काम गर्ने म्यानपावरलाई जोगाएको आरोप लागेको हो ।

नेपाली कामदारलाई जापान पठाउन खुलेका २३ वटा म्यानपावरले 'जापान इन्टरनेशनल को-अपरेशन एजेन्सी (जाइका)' को समेत किर्ते कागजात बनाएर भिसा लगाएको जापानिज दूतावास र जाइकाले पछि थाहा लगाए । ती दुई संस्थाले विभागलाई यसबारे छानबिन गर्न भन्दै पत्र पठाएका थिए । किर्ते कागजातबारे अनुसन्धान गर्ने जिम्मा पाएका निर्देशक उप्रेती नै म्यानपावरहरूसँग मिलेको स्रोतले बतायो । विभागले म्यानपावरहरूलाई स्पष्टीकरण सोधेको छ । तर, लामो समय बितिसक्दा पनि विभागले जापानीलाई कुनै जानकारी दिएको छैन् । 'स्पष्टीकरण सोधेको लामो समय भइसकेको छ । सबैले जवाफ पनि दिइसकेका छन् । तर, कसले के भन्यो ? स्पष्टीकरणमा के आयो ? केही अत्तोपत्तो छैन । उनी पैसा खाएर आँखा चिम्ली बसेका छन् । म्यानपावरहरूलाई उनकै संरक्षण छ भन्ने त स्पष्ट भइसकेको छ । नत्र अहिलेसम्म कारबाही भइसक्थ्यो', स्रोतले भन्यो । निर्देशक उप्रेतीले म्यानपावरलाई स्पष्टीकरण सोधेको स्विकारेका छन् । म्यानपावरले स्पष्टीकरण पेश गरिसकेको र हाल अनुसन्धानकै क्रममा रहेको उनको भनाइ छ । 'अनुसन्धान भइरहेकाले अहिले नाम नखुलाएका हौं, फेरि अनुसन्धानको क्रममा गल्ती नगरेको पाइयो भने म्यानपावरलाई नराम्रो हुन सक्छ', उनले भने ।

# राजीनामा दिएका सैनिकलाई सुविधा

नेपाली सेनाले निवृत्तिभरण तथा उपदानमा राजीनामा स्वीकृत भएका पदिक, बिल्लादार तथा अन्यदर्जाका सैनिकहरूलाई प्रदान गरिने सेवासुविधालाई सहज र छिटोछरितो बनाउनका लागि विभिन्न निर्णय गरेको छ । कार्यरथी विभागले निवृत्तिभरण तथा उपदानमा राजीनामा स्वीकृत भएकाहरूलाई प्रदान गरिने सेवा-सुविधालाई सहज तथा छिटो सम्पादन गर्नका लागि परिशिष्ट 'क' अनुसार चरणबद्ध रुपमा कार्य सञ्चालन गर्ने व्यवस्था मिलाएको छ ।

विभागले त्यस्ता सैनिकहरूलाई अभिलेखालयमा सम्पर्क गर्न भनेको छ । अन्यथा आफूलाई पायक पर्ने सैनिक अभिलेखालयको शाखा कार्यालय इटहरी, पोखरा र नेपालगञ्जमा सम्पर्क राख्न सूचित गराइएको छ । त्यस्तै, सकलदर्जाका सैनिकलाई आर्थिक वर्ष २०७९-८० को सम्पत्ति विवरण भरेर एक प्रति सम्बन्धित युनिट र एक प्रति निवृत्तिभरणमा खाली हुँदा ल्याउनुपर्ने कागजातसहित अभिलेखालयमा पेश गर्न निर्देशन दिइएको छ ।



# काठमाडौँमा चिनियाँ नेत्रीको व्यस्ततम् ६० घण्टा

*चिनियाँ कम्युनिष्ट पार्टीको युन्नान प्रान्तीय स्थायी समिति सदस्य तथा प्रचार विभाग प्रमुख चङ यान मैत्रीपूर्ण भ्रमणका निम्ति काठमाडौंमा हुनुहुन्छ । सोमबार बिहान ११ बजे छन्तु हुँदै काठमाडौं आइपुगेको चङ नेतृत्वको टोली आज राति फर्कने कार्यक्रम छ ।*



*टोलीले नेपालको केही सरकारी र निजी सञ्चारमाध्यमका साथै काठमाडौंस्थित आफ्नै समाचार समिति सिन्ह्वाको समेत अवलोकन भ्रमण गरेको छ । उक्त टोलीले अस्ति दिउँसो उपराष्ट्रपति रामसहायप्रसाद यादव र मंगलबार सञ्चार तथा सूचना प्रविधिमन्त्री रेखा शर्मासँग शिष्टाचार भेटवार्ता गरेको थियो ।*

*छाउनीस्थित राष्ट्रिय संग्रहालय, भक्तपुर दरबार स्क्वायर, स्वयम्भूनाथ, पर्यटकीय क्षेत्र ठमेल भ्रमण गरेको सो टोलीले नेपाल-चीन कार्यकारी परिषद्सहित नेपाल टेलिभिजनको अवलोकन भ्रमणपश्चात् नेपाल-चाइना मिडिया फोरम र जनआस्था मिडिया हाउस पुगेर बुद्धिजीवी र सञ्चारकर्मीहरूसँग अन्तरक्रिया गरेको बुझिएको छ ।*

*युन्नान नेपालसहित दक्षिण एशियाली मुलुकहरूसँग सरकारी र गैरसरकारी दुवै खाले घनीभूत सम्पर्कमा रहँदै आएको महत्वपूर्ण प्रान्त हो । यसले ०७२ को भूकम्पताका नेपाललाई ठूलो परिमाणमा भौतिक सहायता उपलब्ध गराएको थियो । मिडिया क्षेत्रमा पनि यसले युन्नान डेली (Yunnan Daily) र चाइना न्युज सर्भिस (Link Times) अनि आफ्नै प्रान्तीय सूचना विभागमार्फत नेपालसँग सहकार्य गर्दै आएको छ । भविष्यमा यस्ता साझेदारी अझै सशक्त हुने विश्वास गरिएको छ ।*

## पाठक-पत्र

# महानगर प्रहरीमा किन भयो विद्रोह ?

बागमती प्रदेश मुख्यमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयले ०७८ चैत २४ गते स्थानीय तहको सेवाको गठन तथा सञ्चालन सम्बन्धमा व्यवस्था गर्न बनेको अध्यादेश २०७८ जारी गरेको थियो । उक्त अध्यादेशको दफा ९ र ३० अनुसार काठमाडौं महानगरपालिकाले २०७९ असारमा तह वृद्धिका निम्ति आवश्यक योग्यता पुगेका कर्मचारीलाई दरखास्त फारम भर्न सूचना जारी गर्‍यो । जुन बेला लोकनाथ पौडेल प्रमुख प्रशासकीय अधिकृत थिए । ०७९ भदौमा वसन्त अधिकारी कार्यभार सम्हाल्न आइपुगे । योग्यता र सेवा अवधि पुगेका कर्मचारीले फारम भरे तर त्यसलाई थन्क्याएर राखियो । प्रमुख प्रशासकीय अधिकृतबाट समस्या संबोधन नभएपछि मेयर बालेन्द्र साहलाई अनुरोध गर्दा पनि केही पार लागेन ।

बागमती प्रदेश सरकारले ०७९ फागुन १८ गते जारी गरेको ऐनको दफा ४ मा तह र पदनाम तथा दफा (४) को उपदफा (४) मा उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि सहायक तेस्रो तहमा कुनै कर्मचारी पदाधिकार नरहेमा सो तहको पद स्वतः खारेज हुने, त्यसमा पदपूर्ति नगरिने तर ऐन प्रारम्भ हुँदाका बखत सहायक तेस्रो तहमा कायम रहेका कर्मचारी पाँच वर्ष पूरा गरेपछि स्वतः चौथो तहमा वृद्धि हुने कानुनी व्यवस्था छ । यसैगरी दफा ९ ले पदपूर्ति प्रक्रिया तोकिदिएको छ । दफा १२ (१) ले स्थानीय सेवाको कुनै पद रिक्त भएमा एक महिनाभित्र सूचना नदिने पदाधिकारीलाई विभागीय कारबाही हुने भनेको छ तर यिनले आफू सचिव हुने अवधि पुग्दैन भन्दै हिँडेका छन् । अहिले पनि काठमाडौं महानगरपालिकामा करिब १५० दरबन्दी खाली छ । नियमविपरीत आउने कर्मचारीको तलब भत्ता तथा सुविधा नियुक्त गर्ने पदाधिकारीबाट असुलउपर गरिनेछ भन्ने व्यवस्थाका विपरीत अवैतनिक सल्लाहकार नियुक्त गर्ने, गाडी सुविधा दिने र पेट्रोल दिने अनि क्रमशः तलबभत्ता उपलब्ध गराउँदै जाने गरेका छन् ।

मेयर र प्रमुख प्रशासकीय अधिकृतलाई बारम्बार अनुरोध गर्दासमेत आफ्नो माग संबोधन नभएपछि विभिन्न तहका करिब ५०० कर्मचारी करिब ८ समूहमा ०७९ फागुनमा उच्च अदालत पाटन गए । अदालतले चैत अन्तिमतिर ३५ दिनभित्र कानुन कार्यान्वयन गर्नू भनी परमादेश जारी गर्‍यो र ०८० साल वैशाखमा फैसला कार्यान्वयन गर्न म्याद जारी गर्‍यो । यिनले जेठ-असारभर घुमाएर कार्यान्वयन गर्न आनाकानी गरिरहे । तह वृद्धि भएकासँग प्रतिव्यक्ति एक लाखका दरले उठाउन प्रशासन विभागका प्रमुख दीपक अधिकारी, महाशाखा प्रमुख सरिता राई, अधिकृत रामप्रसाद सापकोटा तथा प्रमोदकुमार पोखरेललाई प्रयोग गरे । नगरप्रहरी हवल्दारबाट रकम उठाउन नसकेपछि यी रुष्ट थिए । निवेदक हवल्दार अदालतको अपहेलनामा पुनः अदालत गएपछि स्रेस्तेदार ठगिन्द्र कट्टेल साथी भएका कारण मुद्दा दर्ता नगरी बसन्त अधिकारीलाई फोन मार्फत जानकारी दिए । अपहेलनामा कारबाही हुने भएपछि यिनले हतार हतार २०८० असार २५ गते तहवृद्धिको पत्र दिए तर दर्ज्यानी चिह्न दिएनन् । जसकारण नगर प्रहरी हवल्दारले पत्र पाएकै छौं, तलब पाएकै छौं भनी आफैं दर्ज्यानी चिह्न लगाउन बाध्य भए ।

तह वृद्धिको पत्र बुझेकै दिन दर्ज्यानी चिह्न दिएको भए के आज यो घटना हुन्थ्यो ? मेयरको निजी खर्च धान्न गाह्रो भयो भन्दै विभिन्न ठेकेदारसँग रकम माग गरिरहेका छन्, हारगुहार गरिरहेका छन् । आज ५८ जनाले सहायक निरीक्षकको दर्ज्यानी चिह्न सिम्बोलिक रूपमा लगाए तर कारबाही ४२ जनालाई मात्र किन गरियो ? मेयरको पिएसओ, उपमेयरको पिएसओ तथा प्रमुख प्रशासकीय अधिकृतको पिएसओसहित नगर प्रहरी बल प्रमुख राजुनाथ पाण्डेका अघिपछि लाग्ने १६ जनालाई कुनै कारबाही किन भएन ? यस्तो दण्डहिनता र असमानता पनि हुनसक्छ ? मेयर बालेनलाई स्टन्टबाजी गर्दै फुर्सद छैन । कुनै एक नगर प्रहरीले निलम्बन भएको आवेग सहन नसकी आत्मदाह गर्‍यो वा आत्मघाती कदम चाल्यो भने त्यसको जिम्मा कसले लिन्छ ?

### • जर्साबहरूले पत्याउन थाले आफ्नै अस्पताललाई

नेपाली सेना तथा तिनका आश्रित परिवारको स्वास्थ्योपचारका लागि छाउनीमा स्थापित वीरेन्द्र सैनिक अस्पतालको सेवासुविधा छिटोछरितो भएपछि भीआईपीहरू उपचारका लागि त्यतै धाउन थालेका छन् । सन् १९९० मा बनेको उक्त अस्पतालले काठमाडौं महानगरपालिकासँग समन्वय गरेर बेलाबखत विभिन्न स्वास्थ्य सेवा सञ्चालन गर्दै आएको छ भने निःशुल्क डायलायसिस सेवा पनि उपलब्ध छ । ६३५ शय्याको अस्पताललाई ९०० शय्याको बनाउने प्रक्रिया अगाडि बढेको छ । अस्पतालमा हाल ३५० चिकित्सक कार्यरत छन् । पूर्वरथी बालानन्द शर्माकी श्रीमती हाल यही अस्पतालमा उपचाररत छिन् । न्यूरोको समस्या देखिएकी उनी शिथिल अवस्थामा रहेकाले आइसीयुमा उपचारमा भइरहेको छ ।

उनलाई मुलुककै उत्कृष्ट मानिएको मेडिसिटी अस्पतालबाट ल्याएर यहाँ भर्ना गरिएको हो । त्यस्तै, पूर्व प्रधानसेनापति रुक्माङ्गद कटवालले पनि सैनिक अस्पतालमै हप्ताको दुई पटक डायलाइसिस गराउँदै आएका छन् । हाल स्वास्थ्य अवस्थामा निकै सुधार आएका उनी आफैं हिँडडुल गर्नसक्ने भएका छन् । उपप्रधान एवं रक्षामन्त्री पूर्णबहादुर खड्काले हालै सोही अस्पतालमा प्रोस्टेटको शल्यक्रिया गराएका छन् । पूर्व प्रधानसेनापति प्यारजंग थापा, राजेन्द्र क्षेत्रीलगायत पनि उपचारका लागि सैनिक अस्पताल नै पुग्ने गरेका छन् । यस अस्पतालले बिहान ८ बजेदेखि नै ओपिडी सेवा सञ्चालनमा ल्याएको छ । सेवा लिन दिनभर लाइन लाग्नुपर्ने बाध्यता हटेको छ । आधा घण्टामै औषधि पाइन्छ ।

बिरामी कुरुवाका लागि अस्पतालले छुट्टै बसोबासको व्यवस्थापनसमेत मिलाएको छ । नियमित सरसफाइ गर्न थालिएकाले अस्पताल चिटिक्क परेको छ । पहिलेभन्दा अस्पताल धेरै राम्रो भएको एक सैनिकले बताए । सैनिक अस्पतालमा विगतको तुलनामा धेरै सुधार भए पनि सानातिना कमजोरीमा भने ध्यान पुर्‍याउन आवश्यक देखिन्छ । एक साताअघि एक जना गर्भवतीको ज्यान गयो । सिपाही तहमा कार्यरत उनको अत्यधिक रक्तश्रावका कारण मृत्यु भएको हो । मरेको बच्चालाई जन्म दिएकी उनको बेलैमा ध्यान पुर्‍याउन नसक्दा प्राण गुम्यो ।

# आफ्नो गल्ती ढाक्न मन्त्री फेर्ने ?

**गिरिराजमणि पोखरेल, उपमहासचिव, नेकपा माओवादी (केन्द्र)**

*नेकपा माओवादी केन्द्रबाट पटक-पटक सरकारमा अवसर पाइरहने नेतामध्येका हुन्, गिरिराजमणि पोखरेल । जनमोर्चा हुँदै माओवादीसँग एकीकरण प्रक्रियामा आएका उनी ०६३ यता पाँच पटक सरकारमा सहभागी भए शिक्षा र स्वास्थ्यमन्त्रीका रूपमा । गिरिजाप्रसाद नेतृत्वको अन्तरिम सरकार, देउवा हुँदै ओली सरकारमा सामेल भएका उनी ०६५, ७२, ०७४ मा मन्त्री थिए । केपी ओली नेतृत्वको सरकारमा दुई पटक गरी ४० महिना शिक्षामन्त्री चलाए । चुच्चे नक्साको श्रेय धेरै ठाउँमा केपी ओलीले लिनुभएको छ तर त्यही समयमा हो, नयाँ नक्सा समेटेर पाठ्यपुस्तक विकास केन्द्रले छापेको हजारौं पाठ्यपुस्तक बिक्री गर्न बन्देज लगाएर डम्प गराउने पनि केपी नै हुनुहुन्थ्यो, त्यसैको एक साक्षी हुन् गिरिराजमणि । महोत्तरीबाट ०६४, ०७० र २०७४ को निर्वाचनमा 'ह्याट्रिक' गरेका पोखरेलले ०७९ को निर्वाचनमा पराजय भोगे । साढे चार दशक लामो राजनीतिक यात्रा तय गरिसकेका उनी ०३६ सालमा नेकपा (चौम) को पूर्णकालीन कार्यकर्ता हुँदै राजनीतितिर मोडिएका हुन् । कुनै समयको वैचारिक पत्रिका (हाल बन्द) मूल्यांकन मासिकमा रहेर पत्रकारिताको अनुभवसमेत बटुलेका छन् ।*

***– हरि गजुरेल***



*० बालुवाटार, नक्कली भुटानी शरणार्थी, सुन काण्डलगायत एकपछि अर्को काण्डमा हात हाल्दै छ प्रचण्ड नेतृत्वको सरकारले । यसले गर्दा सरकारमाथि खतरा हाउने त होइन ?*

- एकातिर सबै दलको सरकार बनाउनुपर्ने, एकातिर संसदलाई पूर्ण अवधि चलाउनुपर्ने अवस्था छ । सरकारले जनताको पक्षमा काम गरिरहेको सन्देश दिनु छ । सुशासन कायम नगरी सामाजिक, आर्थिक रूपान्तरण गर्न सकिँदैन । तर संगठित ढंगले सेटिङमा हुने भ्रष्टाचार भत्काउनु सजिलो काम पनि होइन । यथास्थितिकै वरिपरि मुलुकलाई चलाउने राजनीतिक प्रवृत्तिलाई चिरेर माथि जाऊँ भन्नेबित्तिकै अवरोध सिर्जना गर्ने वा हातखुट्टा बाँध्ने प्रक्रिया पनि देखिएकै छ । यसो गर्दा खतरा आइलाग्छ भने सामना पनि गर्नै पर्ने हुन्छ ।

*० भ्रष्टाचारको सेटिङ भत्काउन खोज्दा नारायणकाजी श्रेष्ठलगायत केही मन्त्रीकै हातखुट्टा बाँध्न खोजिएको हो ?*

- प्रधानमन्त्रीज्यूले नै राष्ट्रिय संकल्प गर्नुभएको छ कि, यसपटक परिणाम देखिने गरी काम गर्छु भनेर । नारायणकाजी श्रेष्ठ पार्टीको उपाध्यक्ष, उपप्रधान, गृहमन्त्री भएको हिसाबले पारदर्शिता, मितव्ययितालाई जोड दिनुभएको छ । उहाँले जुन मन्त्रालयको नेतृत्व गर्दा पनि यही विषयमा जोड दिँदै आउनुभएको छ । मन्त्रालयको सफलताले प्रधानमन्त्रीलाई सफल बनाउँछ । प्रधानमन्त्री सफल हुँदा सिंगो क्याबिनेट सफल हुने हो । गठबन्धनका दलमा ठीक खालको बुझाइ नहुँदा सुशासन अगाडि बढाउन सहज हुँदैन । सही काम गर्छु भन्ने मन्त्रीहरूलाई हात-खुट्टा बाँध्नु हुँदैन । हामीकहाँ सेटिङमा भ्रष्टाचार हुन्छ भन्ने कुराको उदाहरण नक्कली भुटानी शरणार्थी प्रकरण नै हो । भ्रष्टाचारविरुद्ध, सुशासनको पक्षमा जब एउटा अभियान चल्छ तब बाहिर र भित्र दुबैतिर प्रभावित गर्छ । यो अभियान आफ्नो पार्टीलाई बचाउँछु र अरुलाई लक्ष्यित गर्छु भनेर शुरु गरिएको हुँदै होइन । अनुसन्धान गर्दै जाँदा तथ्य जस्तो आउँछ, त्यसैमा आधारित रहेर अगाडि बढ्ने हो । आफ्ना गल्ती सतहमा आउने डरले अनुसन्धान रोकिदिने, पात्र बदल्ने वा मन्त्री नै बदल्ने खेल पनि हुन सक्छ । ठीक र बेठीक, सत्य र असत्य, न्याय र अन्यायको संघर्ष अगाडि बढाउँदा सबैको साथ लिने कोसिस गर्नुपर्छ । जो आफैं अपराधमा संलग्न छ वा गल्तीको भागेदार छ उसलाई साथ दिने स्थिति रहँदैन । सत्ता टिकाउनकै लागि सबै कुरा ढाकछोप गर्छु भन्ने जसले सोच्छ आज नभए भोलि राम्रो परिणाम आउँदैन भन्ने हेक्का राख्नु जरुरी छ ।

*० तपाईंकै मीटरव्याज पीडित आफन्तहरू अहिले पनि शान्तिबाटिकामा अनशनरत छन् । तपाईं निकटकै नारायणकाजी श्रेष्ठ गृहमन्त्री हुनुहुन्छ । समस्या कसरी समाधान गर्नुहुन्छ ?*

- म प्रतिनिधि सभाको सदस्य महोत्तरी भंगाहाका मीटरब्याज पीडितको समस्यालाई नजिकबाट देखें । यो समस्या मुख्यतया तराई र देशकै समस्या थियो । अघिल्लो सरकारले मीटरब्याजको समस्यालाई अपराधको सूचीमा राख्नेसम्म काम गऱ्यो तर त्यसले जुन प्रकारको कानुन र संरचना माग गर्थ्यो त्यससम्बन्धी केही पहलकदमी भएको थिएन । पटक-पटक संसद् र बाहिर यो विषय उठान गरिरहें । अहिले यो मुद्दा नयाँ ढंगले सतहमा आएको छ । सरकारले कानुन बनाउने प्रतिबद्धता जनाएको छ । आयोग बनाएको छ अर्थात् कार्यान्वयन प्रक्रिया शुरु भएको छ । सामन्तवादको निकृष्ट शोषण मीटरब्याजीमा व्यक्त हुन्छ । त्यसलाई समाधान गर्न ऐन बन्यो । जसरी जमिन, रकम फिर्ता हुँदै छन्, कानुन कार्यान्वयन हुँदै छ यो ठूलो उपलब्धिभित्र पर्छ । यसबीच कतिपय व्यक्तिले मीटरब्याजीलाई कारबाही प्रक्रिया अगाडि बढाउन नदिन प्रशासनदेखि पार्टीसम्म प्रभावमा पारेका छन् ।

*० केपी ओली प्रधानमन्त्री हुँदा तपाईं शिक्षामन्त्री । उहाँको चाहनाविपरीत नेकपाका नेताहरूको दबाबमा कालापानी, लिपुलेक अंकित नेपालको चुच्चे नक्सा प्रकाशित भयो । उक्त नक्सा पुस्तकमा पनि छापियो तर पुस्तक डम्प भयो । वास्तविकता के थियो ?*

- विद्यार्थीकालदेखि नै असमान सन्धि खारेजी, अतिक्रमणमा परेका जग्गा जमिन फिर्ता गर्नेदेखि हाम्रो भूभागमा बसेका सेना फिर्ता गर्नुपर्ने भनेरै लडियो । मेची-महाकाली अभियान चलाइयो । हामी सरकारमा गएसँगै भारतले नेपालका भूभागसमेत समेटेर नयाँ नक्सा सार्वजनिक गऱ्यो । लगत्तै युनेस्कोको सम्मेलनमा भाग लिन पुगेको बेला भारतीय शिक्षामन्त्रीसँग भेट भयो र उनलाई यसबारे ध्यानाकर्षण गराएँ । नेपाल फर्किएलगत्तै कालापानी, लिपुलेक, लिम्पियाधुरा हाम्रो भूभाग हुन् भन्ने ऐतिहासिक आधार खोज्न लगाएँ । लाइन मिनिष्ट्री भूमिसुधारसँग छलफल गरियो, विज्ञहरू राखेर । अन्त्यमा सबै कुरा गएर ठोक्किने प्रधानमन्त्रीसँग हो । नेकपाको सचिवालय बैठकले राष्ट्रपतिको संबोधन हुने दिन बिहान निर्देशन दिएपछि उहाँले बाध्य भएर वा दबाब थेग्न नसकेर मात्र नक्सा सार्वजनिक गर्नुभएको हो । यसको श्रेय उहाँले धेरै ठाउँमा लिनुभएको छ । लगत्तै पाठ्यक्रम विकास केन्द्रले चुच्चे नक्सा अंकित पुस्तक प्रकाशन गऱ्यो । त्यहाँ मैले भूमिका लेखेको थिएँ तर छापिएको पुस्तक वितरणमा उहाँले रोक लगाउनुभयो ।

*० श्रेय लिने आफैंले तर विदेशी मुलुकलाई पत्राचार नगर्ने चाहिँ किन नि !*

- जहाँ गल्ती भएको छ सोही विन्दुबाट गल्ती सच्याएर अगाडि बढ्नुपर्छ ।

*० झण्डै ४२ महिना केपी ओलीकै सरकारमा शिक्षा, विज्ञान तथा प्रविधिमन्त्री रहनुभयो । हाम्रो शिक्षामा माफियाको प्रभाव के-कस्तो देख्नुभयो ?*

- प्रकृतिलाई बुझ्ने र समाज बनाउने क्रममा मान्छेले जुन अनुभव र ज्ञान हासिल गऱ्यो त्यसलाई अर्को पुस्तामा हस्तान्तरण गर्ने प्रक्रिया नै शिक्षा हो । हाम्रो ज्ञान, वैज्ञानिक युगिन, देशभक्तिपूर्ण र आर्थिक ढंगले धान्न सक्ने हुनुपर्छ । ०७२ मा आठ महिना र दोस्रो पटक ३२ महिना ओलीको नेतृत्वमा रहेर काम गरें । अहिले शिक्षालाई खरिद-बिक्रीको विषय बनाइएको छ । ०४६

> **छापिएको पुस्तक वितरणमा केपी ओलीले रोक लगाउँदै दुवै प्रतिवेदन लुकाउनुभयो ।**
>
> •••
>
> **सुवास नेम्वाङको अप्रत्यासित महाप्रस्थानले पार्टी एकताको कडीलाई झनै कमजोर पारेको छ ।**

सालपछि पञ्चायतले रोजगारी नदिने, वामपन्थी भनेर लखेट्ने प्रवृत्तिविरुद्ध आफ्नो खुट्टामा उभिएर यही माटोमा केही काम गर्छु भन्ने निजी लगानीका स्कूल शुरु भएका हुन् । ०४६ सालपछि निजीकरण र उदारीकरणको ढोका खोलियो । राज्यलाई कमजोर बनाउने र बजारलाई छाड्ने सोच आयो । त्यसपछि शिक्षा, स्वास्थ्य क्षेत्रमा धेरै विकृति, विसंगति भित्रिए । यसभित्र माफिया छन्, साँच्चै दुःख गरेर खानुपर्छ भन्ने इमान्दार मान्छे पनि छन् । म शिक्षामन्त्री हुँदा नेपालको समग्र शिक्षालाई हेर्ने आयोग बन्यो र दुईवटा प्रतिवेदन केपी ओलीलाई बुझाइयो तर उहाँले दुवै प्रतिवेदन लुकाउनुभयो, सार्वजनिक गर्नुभएन । त्यत्तिखेर शिक्षा मन्त्रालय र योजना आयोग मिलेर २५ वर्षपछिको नेपाललाई कस्तो जनशक्ति चाहिन्छ ? भन्ने प्रतिवेदन प्रधानमन्त्रीलाई बुझाइएको थियो । हाम्रो सोच सार्वजनिक शिक्षाको सवलीकरण गर्दै र निजी लगानीलाई पूरक बनाउनुपर्छ भन्ने विषय थियो । सायद यही कुरासँग विमति भएरै त्यसो गरियो भन्ने लाग्छ । वर्तमान सरकारले चाँडै यी प्रतिवेदन सार्वजनिक गर्ला भन्ने अपेक्षा राखेको छु ।

*० नेपालमा फेरि वाम ध्रुवीकृत हुने वा माओवादी र एमालेबीच एकताको कडी जोडिने सम्भावना कत्तिको देख्दै हुनुहुन्छ ?*

- एकताको कडी अहिले झनै कमजोर भएको छ । सुवास नेम्वाङको अप्रत्यासित महाप्रस्थानले त्यो कडीलाई झनै कमजोर पारेको छ । उहाँसँगको हरेक भेटमा एमाले र माओवादी एकीकरण गर्ने विषयमा विचार विमर्श हुन्थ्यो । माने पनि नमाने पनि नेपालको सर्वाधिक लोकप्रिय आन्दोलन कम्युनिष्ट आन्दोलन नै हो । अहिले पनि संसद्मा ५० प्रतिशत बढी कम्युनिष्टको प्रतिनिधित्व छ । हिजोको यो कडी टुट्नुको प्रमुख दोषी केपी कमरेड नै हुनुहुन्छ । उहाँकै कारण आगाडिको ठूलो सम्भावना तुहियो, अघि बढ्न सकेन । हाम्रा तर्फबाट पनि केही कमजोरी भए होलान् तर मुख्य नेतृत्वको भूमिका प्रधान रूपमा हेरिँदो रहेछ । नेपाललाई बाह्य शक्तिको क्रिडास्थल बनाउने र वामपन्थलाई सकाउन जे-जस्ता क्रियाकलाप भइरहेका छन् यी सबै गतिविधि हेर्दा ढिलोचाँडो कम्युनिष्ट पार्टी ध्रुवीकृत नभई धरै छैन ।

*० रवि लामिछाने धेरै कुरामा गलत छन् भन्ने जान्दाजान्दै पनि जनताले उनको पार्टीलाई जति भोट दिए, त्यसले कांग्रेस, एमालेजस्ता पुरानो दलको बर्चश्वलाई धरापमा पारेन र ?*

- जनमतले पुराना दललाई आलोचनात्मक समर्थन र नयाँलाई स्थान दिएको पाइयो । ब्यालेट बक्समार्फत पुराना दललाई अब पनि बदलिएनौ वा कार्यशैली सच्याएनौ भने हामी विकल्प खोज्छौं भन्ने सन्देश दिइयो । राणाविरोधी, निरंकुशता हुँदै थुप्रै संघर्षको प्रक्रियाबाट गुज्रिएर आएका यी पार्टी सत्तामा गइसकेपछि जनता र राष्ट्रलाई केन्द्रविन्दुमा राखेर काम गर्नुपर्थ्यो । एउटा शक्ति योजनाबद्ध ढंगले नेपालमा वामपन्थी सिध्याउन, कम्युनिष्टलाई नामेट पार्न र गैरकम्युनिष्टलाई ल्याउनुपर्छ भनेर लागेको छ । त्यस ढंगले उदाएका पार्टीको न नीति, न त कार्यक्रम नै हेरेर जनताले साथ वा मत दिएका हुन् । पहिला सत्ता चलाइरहेका दलको गल्तीलाई प्रतिक्रियात्मक ढंगले चुनौतीसम्म दिएका हुन् । यो परिस्थिति सदैव रहँदैन । भविष्यमा जनताले कम्युनिष्टलाई साथ दिने स्थिति आउँछ । स्वतन्त्र भनिनेहरू पनि कुनै न कुनै कित्तामा ढिलो-चाँडो उभिनुपर्छ । मुखौटा लगाएर केही दिन मात्रै बस्न सकिन्छ ।

*० तपाईं आफैं उपमहासचिव रहेको माओवादी केन्द्रको ०६४ सालको उदय र क्रमशः क्षयीकरणको मुख्य भागिदारचाहिँ को ?*

- ०७८ सालमा बसेको केन्द्रीय समिति बैठकले संगठनात्मक क्षेत्रको यथास्थितिलाई नभत्काउने हो भने पार्टीको ओरालो यात्रालाई रोक्न सकिँदैन भन्ने निश्कर्ष निकाल्यो । हामीले संविधान बनायौं समाजवादउन्मुख तर सोअनुसार विचारको विकास गर्न सकेनौं । यो अवधिमा विश्व र नेपाललाई बुझ्न सकेनौं । ०६४ मा संसदको सबैभन्दा ठूलो दल माओवादी बन्नुको कारण विचार नै थियो । यो बीचमा पार्टीलाई विधि, पद्धतिअनुसार चलाउन सकेनौं । पार्टीमा गैरसर्वहारा प्रवृत्तिले डेरा जमायो । गुटबन्दीका समस्या देखा परे । आफूलाई धुरी बनाएर सोच्ने प्रवृत्ति हाबी भयो । हाम्रो टेक्ने जमिन थियो, वर्ग । त्यसलाई चटक्कै छोड्यौं । उत्पीडित समुदायलाई भुल्यौं । अरुको भोट लिने नाममा आफ्नो वर्ग छाड्यौं । विचारका आधारमा नेताको आचरण रूपान्तरण हुनुपर्ने हो तर हामी उल्टो दिशामा हिँड्न थाल्यौं । संस्कृतिमा यति धेरै प्रदूषण देखा पऱ्यो कि कोही बिचौलिया, भ्रष्टाचारमा डुबे । त्याग, बलिदान, सौर्य, विर्ताका प्रतीकको रूपमा देखा परेका मान्छे अर्को दिशामा जाँदा पार्टी क्षयीकरण हुन पुग्यो । पार्टी निर्माणमा पर्याप्त ध्यान जान सकेन र त अब जनतामाझ जाँदै छौं ।

हामी सबै पार्टीलाई बिगाने वा ओरालो यात्रातर्फ लैजानमा कुनै कुनै ढंगले जिम्मेवार छौं । हामीलाई यो अन्तिम अवसर हो । सबैले संकल्प गरेर अगाडि बढ्नुको विकल्प छैन ।

## कर्मचारी तन्त्रमा अनेकौं काण्ड

ब्याडर बेस्ड सिनियर सहसचिवलाई थन्क्याएर जुनियर हाकिमलाई च्यापिँदा शहरी विकास तथा भवन निर्माण विभागमा अनियमितता र भद्रगोल देखिन थालेको छ । ६ सिनियर सहसचिवलाई उछिन्दै सातौं क्रममा सुरेन्द्रमोहन श्रेष्ठ अहिले शहरी विकास तथा भवन निर्माण विभागका महानिर्देशक बनाइएका छन् । उनीभन्दा सिनियर पद्म मैनाली, रामचन्द्र दंगाल, चक्रवर्ती कण्ठ, नवराज प्याकुरेल, कुमारप्रसाद घिमिरे, दिलिप भण्डारीहरू प्रवल दावेदार थिए ।

संघीय निर्वाचनताका मन्त्रीलाई जिताउनका लागि सचिव सँगै सुटकेश बोकेर जिल्ला खटिएको उपहारस्वरूप सुरेन्द्रले डिजी पद पाएको बताइन्छ । एमालेनिकट नेपाल निजामती कर्मचारी संगठनमा काम गरेका श्रेष्ठ, ओभरसियर हुँदा निकुञ्जतिर थिए । जसरी शहरी विकास तथा भवन निर्माण हुँदै बाग्मती सभ्यताको हर्ताकर्ता हुँदा रवीन्द्र बोहोराले कन्सलटेन्सीलाई पोसे ठीक उही ढंगले सुरेन्द्रमोहनले बदमासी गर्न थालेको शहरी विकास तथा भवन निर्माण विभाग स्रोतले जनआस्थालाई जनाएको छ ।

त्यसको ज्वलन्त उदाहरण हो झण्डै २ अर्ब १८ करोड हाराहारीको कोशी प्रादेशिक अस्पताल विराटनगर निर्माणको ठेक्का । वर्ष दिनअगाडि नै यसको ठेक्का निम्ति संघीय आयोजना कार्यान्वयन इकाइ मोरङले केसी कन्स्ट्रक्सनसँग सम्झौता गरेको थियो । उक्त कन्स्ट्रकसनबाहेक अन्य निर्माण कम्पनी छिर्नै नमिल्ने गरी स्पेसिफिकेशन तयार पारी महानिर्देशक श्रेष्ठ, मचाकाजी महर्जन र संघीय आयोजना कार्यान्वयन इकाइ मोरङका प्रमुख गणेश महर्जनको तीन सदस्यीय टोलीले काम तमाम गरेको बताइन्छ । वर्ष दिनसम्म काम नगरी बसेको कम्पनीले २० प्रतिशत मुनाफा लिएर ठेक्का बिक्री गर्न खोजेको विषय सार्वजनिक भएपछि सुरेन्द्रको निरीहता र सेटिङ छरपष्ट भएको हो ।

यता, शहरीका कान्छा सहसचिव प्रदीप परियार योजना आयोगतिर पुगेका छन् भने रवीन्द्र बोहोरा सार्वजनिक खरिद अनुगमनको कार्यालयतिर हुत्याइएका छन् । योजना आयोगमा कार्यरत सहसचिव सुमन दाहाललाई कर्मचारी प्रशासन फाँट प्रमुख बनाएर सिके राउतले सामान्य प्रशासनमा भित्र्याएका छन् । सिकेका दाजु डा जयकान्त योजना आयोग सदस्य छन्, उनैको सिफारिसमा दाहाललाई सामान्य प्रशासनमा लगिएको हो ।

उता, बेलायत भ्रमणमै रहेको बेला कृष्णहरि पुष्कर प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयबाट अर्थमा छिर्न सफल भएका छन् । आरजुको दबाबमा १४ महिनापछि पुनः उनी अर्थमै फर्किएसँगै केही सहसचिवको जिम्मेवारी हेरफेर गर्ने तयारी भइरहेको अर्थ स्रोतले जनाएको छ ।

## फोटो



दिपेन्द्रराज गिरी



मण्डलामा धर्ना जारी मधेशमा घर छ, साहुकारले सताउँदा हाम्लाई कसको भर छ !
सहमति भो अनेक भन्छन् केही थाहा छैन, यो देशमा दु:खीलाई कसले भलो गर्छ ?

# अनि जाँदैन यात्रुको ज्यान, खस्दैन गाडी ?

दिनहुँ यात्रु ओसारपसार गर्ने अधिकांश सवारी चालकमा स्वास्थ्य समस्या भेटिएको छ । अधिकांशमा उच्च रक्तचाप र सुगर छ । कतिपयको त आँखाको कलरभिजन नै कमजोर छ । दुर्घटनाको जोखिम न्यूनीकरण गर्ने उद्देश्यसहित जिल्ला ट्राफिक प्रहरी कार्यालय गजुरी, धादिङले गरेको स्वास्थ्य परीक्षणमा यस्तो समस्या देखिएको हो ।

धादिङबाट काठमाडौं, चितवन, पोखरालगायत जिल्लामा चल्ने यात्रुवाहक सवारी र ट्रकका ९२ जना चालकको परीक्षणगर्दा ३२ जनाको रक्तचाप १३० भन्दा माथि पाइएको छ । १९ जनामा १२० परडिएलभन्दा माथि सुगर भेटिएको छ । बिहान खानाभन्दा अगाडि नै गरिएको चेकजाँचमा पनि यतिधेरैमा समस्या देखिनुले चालकको अवस्था डरलाग्दो भएको प्रहरी उपरीक्षक गौतम मिश्रले बताए । सामान्य अवस्थामा स्वस्थ मानिसको रक्तचाप माथि १२० र तल ८० हुनुपर्छ । खाली पेटमा जाँच गर्दा सुगर ६० देखि ११० परडिएललाई सामान्य मानिन्छ । तर, स्वास्थ्य परीक्षण गर्दा ३० प्रतिशत चालकको रक्तचाप उच्चतम १३० देखि १७० सम्म (माथि) भेटिएको छ । एक सय ८५ जना चालकको आँखा परीक्षणमा पाँच जनाको आँखाको कलर भिजन कमजोर पाइयो ।

केही दिनअघि पृथ्वीराजमार्गअन्तर्गत बेनिघाट रोराङको मझिमटारमा गरिएको स्वास्थ्य परीक्षणमा भने चार जना चालक अस्पताल भर्ना गरेरै उपचार गर्नुपर्ने अवस्थाका



भेटिएका थिए । नेपालगञ्जका ३९ वर्षीय रवि परियारको रक्तचाप २१०/१५० थियो । धादिङका ३६ वर्षीय शिव कुँवरको १९०/१३० रहेको पाइयो । त्यस्तै तनहुँका ४५ वर्षीय प्रेम आलेको २२०/१२० र धादिङका ३७ वर्षीय सुजित राईको २१०/१५० रक्तचाप देखियो । ३३१ परडिएल सुगर रहेका बिरामी चालक पनि यहीं भेटिए । स्वास्थ्यकर्मीका अनुसार यतिसम्म उच्च रक्तचाप भएका बिरामीलाई अस्पतामा भर्नै गरेर उपचार गराउनुपर्छ । कुनै पनि अवस्थामा अपरझट आफैँ ढल्न सक्छ । तर, त्यस्तै चालकले यात्रु बोकेर निर्वाध कुदिरहेका छन् । स्वास्थ्य परीक्षणमा सहभागी स्वास्थ्य कार्यालय धादिङका वरिष्ठ ल्याब असिस्टेन्ट जुनु श्रेष्ठ भन्छिन्, 'रक्तचाप २२०/१२० हुनु भनेको तुरुन्तै औषधि चलाउनुपर्ने खालको बिरामी हो । टाउकोमा रक्तनली फुट्ने, रगतको ढिका जम्नेजस्ता समस्या आई ब्रेन ह्यामरेज हुन सक्छ ।'

सुगर ३१३ पर डिएल भनेको धेरै हो । तत्काल रगत जाँच गरी उपचार गर्नुपर्छ । खाली पेटमा १२० र खाना खाएको दुई घण्टापछि १४० पर डिएलभन्दा बढी आयो भने बिरामीको अवस्था हेरेर चिकित्सकको सल्लाहअनुसार उपचार तथा औषधि सेवन गर्नुपर्ने श्रेष्ठको भनाइ छ । लामो दूरीमा चल्ने रात्रिकालीन सेवाका सवारी चालकमा अझ बढी स्वास्थ्य समस्या रहेको जिल्ला ट्राफिक गजुरीका निरीक्षक रवीन्द्रकुमार श्रेष्ठले बताए । धादिङमा दुई ठूला पृथ्वीराजमार्ग र त्रिभुवन राजपथ छन् । राजमार्गमा दिनहुँजस्तो सवारी दुर्घटना हुन्छन् । सडक, सवारी साधन, चालकको लापरबाही र कमजोरी तथा अन्य कारण मानिसले अकालमै ज्यान गुमाइरहेका छन् । तर, चालकले आफ्नै स्वास्थ्यको समेत ध्यान दिन नसक्दा यात्रुलगायत अरुलाई समेत जोखिम थपेको छ । प्रहरीले अब चालकको लाइसेन्स र ब्लुबुकसँगै स्वास्थ्य अवस्थाबारे पनि सोधपुछ गर्ने कुरालाई निरन्तरता दिनुपर्ने अवस्था देखिएको छ ।

*- शंकर श्रेष्ठ*





## मेरो कथा, मेरो व्यथा

हरिजी
priyarasuwa@gmail.com

# प्रधानमन्त्री कार्यालयबाट हटाइदिनोस् न प्रभू !

काम कम, चाकडी बढी, त्यसैले बिग्रिएको छ, सार्वजनिक प्रशासन । यही चाकडी कला नजान्दा पिल्सिएको बबुरो हुँ म । सार्वजनिक सेवामा पाइला राखेको साढे तीन दशकभन्दा बढी भयो । जीवनका २७ वर्ष त स्थानीय तहमै रहेर बिताएँ । बाध्यताको माखेसाङ्लोमा परेर केही महिनादेखि सिंहदरबारमा कार्यरत छु तर मलाई गाउँमै बसेर सेवा गर्ने रहर छ । सिंहदरबार त पहुँच हुनेहरूको थलो हो । मलाई भुइँमान्छेको सेवा गर्ने रहर छ । दैनिक ५३ किमी यात्रा गरेर प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय आउजाउ गरिरहेको छु ।

भनिन्छ, उत्तम व्यापार, मध्यम कृषि, निर्घिणी नोकरी । नेवारको सन्तान, पिता पुर्खा, दाजुहरूले रोजेको उत्तम बाटो (व्यापार) छोडेर नोकरी रोज्न आइपुगेको हुँ । ६ जना दाजु आ-आफ्नो व्यापार व्यवसायमै रमाइरहेका छन्, म मात्र छु सरकारी सेवामा । ३७ वर्षअघि ०४३ साल मंसिरमा तत्कालीन गाउँ पञ्चायतको सचिव हुँदै निजामतीमा पाइला राखेको हुँ । त्यो बेला कार्यालय पुग्न घरबाट १६ घण्टा दूरी पार गर्नुपर्थ्यो । एक वर्षपछि नयाँ ठाउँमा सरुवा भएँ । काभ्रेका धेरै स्थानीय तहमा बसेर काम गरियो । उग्रचण्डी नाला, कोशीपारिलगायत पालिकामै बिताइयो २७ वर्ष । ०६४ मा खरिदारबाट नासुमा उक्लिएँ । १३ वर्षपछि अर्थात् ०७७ सालमा शाखा अधिकृतमा बढुवा भएँ । सेवा प्रवेश गरेदेखि नै निजामती सेवा प्रभावकारी, जनमुखी, सेवाग्राही मैत्री, कानुनसम्मत, व्यावहारिक हुनुपर्छ भन्ने मान्यता बोकेर हिँडें र त्यसैलाई व्यवहारमा उतार्ने प्रयास पनि गरें ।

नागरिकले तिरेको करबाट तलब पाउनेमध्ये एक म । मैले पनि सेवाग्राही नागरिकको गाली, श्राप बोक्न नपरोस् भनेर आफूलाई क्रियाशील राख्न भरमग्दुर प्रयास गरें । गृह मातहतका विभिन्न निकायमा बसेर लामो समय काम गरें । सेवा प्रवाहकै सिलसिलामा प्युठान, इलाका प्रशासन कार्यालय जनकपुर, जिल्ला प्रशासन कार्यालय लमजुङ, जिल्ला प्रशासन कार्यालय धनकुटा, जिल्ला प्रशासन कार्यालय काभ्रेपलाञ्चोक तथा मन्त्रालयमा कर्मचारी प्रशासन शाखा, सीमा तथा अध्यागमन शाखा, विभूषण शाखामा रहेर काम गर्ने अवसर मिल्यो । गृह मन्त्रालयको शान रहने गरी जिम्मेवारी निर्वाह गरें । कुनै प्रकारको लोभलालच राखिन, अतिरिक्त सेवा-सुविधा लिइन । राज्यले खातामा जम्मा गरिदिने तलब भत्ताबाहेक यो अवधिमा पनि कुनै सेवाग्राहीसँग सेवा प्रवाहबापत एक कप चियासमेतको मागदाबी नगरी करिब आधा लाख सेवाग्राहीलाई सेवा प्रवाह गर्न सकें ।

अधिकृतमा बढुवा हुँदा ब्याजी साथीहरूले सिंहदरबार रोज्नुभयो । म दूरदराज प्युठानतिर पुगें । उहाँहरूको राय, सुझाव थियो बुढेसकालमा जिल्ला गएर दु:ख थप्ने काम नगर्नु तर म सिंहदरबार छाडेर अत्यधिक कामको चाप हुने जिल्ला प्रशासन कार्यालयमा काम गर्ने अनि पीडित भुइँमान्छेलाई विशेष सहयोग गर्ने सोचसाथ जिल्ला रोजें । कागजात पुगेका कुनै पनि सेवाग्राहीलाई आजै हुने कामका लागि भोलि आउनुहोस् भनिएन । अपांगता भएका सेवाग्राहीलाई बिदाका दिन पारेर उनीहरूको घर दैलोमा पुगी सेवा दिन पाउँदा बेग्लै आनन्द अनुभूति हुन्थ्यो । बेथिति र लापरबाही जिल्ला-जिल्लाका सरकारी कार्यालयमा मौजुद छन् । यस्ता बेथिति काभ्रेपलाञ्चोकमा अझ बढी छन् । यो बेथितिमा पनि थिति बसाल्न सक्दो प्रयत्न गरें । सेवाग्राहीलाई अल्मल्याउने, ढिलासुस्ती गर्ने काम कहिल्यै गरिएन । प्राय: जुन-जुन कार्यालयमा सरुवा भएर जान्थें नयाँ नागरिकताको जिम्मा मलाई नै बढी हुन्थ्यो । यसको अलावा प्रतिलिपि, राष्ट्रिय परिचयपत्र, सवारी पास, बजार अनुगमन, नाबालक परिचयपत्रलगायतमा कामको चाप

**दैनिक ५३ किमि पार गरेर बनेपादेखि अफिस आउने-जाने गरिरहेको छु । साथीहरू भन्छन्, यतै एउटा कोठा लिएर बस्नु, किन दु:ख बेसाइरहेका छौ ।**

उत्तिकै आए पनि बिरामी भई थला नपरुञ्जेल काम गर्न गाह्रो भयो भन्न सिकिएन/सकिएन ।

गृह मन्त्रालयमा रहेपछि धेरैको अपेक्षा हुन्छ मान पदवीबाट विभूषित हुने, त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा सरुवा हुने, वैदेशिक भ्रमण गर्ने, सकभर केन्द्रीय अड्डा सिंहदरबार नछाड्ने । तर, मैले दुई वटा विभूषण दावी गर्ने अवधिमा आजसम्म कुनै माग दाबी गरिन न त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल नै सरुवा मागें । न वैदेशिक भ्रमणका लागि चाकडी गरियो । कहीँ-कतै पदीय हैसियत देखाएर एक कप चियासमेत सित्तैमा खाइएन । काभ्रेपलाञ्चोकमा नागरिकता शाखाको जिम्मेवारी पाइयो । कार्यरत रहँदै गर्दा ०७९ पुस ८ गते दुर्घटनामा परियो । देब्रे कुम भाँचियो । त्यसपछि मेरो सेवाप्रवाहमा अकल्पनीय ठेस लाग्यो । धुलिखेल अस्पतालमा उपचारपछि ६ हप्तासम्म सेवा प्रवाहमा प्रतिकूल असर पर्ने डाक्टरको कुराले मन अलि खिन्न भयो तथापि उपचार र आरामको विकल्प थिएन । दुर्घटनाको ७ दिनपछि गाडी रिजर्भ गरी फलो अपका लागि धुलिखेल अस्पताल र बिदाका लागि कार्यालय गएँ । कार्यालयमा हाकिमहरू भेटिएन । प्रशासन शाखाका साथीको सल्लाहअनुसार ६ दिनका लागि बिदा लेखेर आएँ । अत्यधिक दुखाइले दिनभर पर्खन सकिएन । पुन: अर्को हप्ता यही प्रक्रिया दोहोरियो । तर, बिदा स्वीकृत हुन सकेन । त्यसपछि मनमा एक खालको पीडा थपियो । यस्तो बेलामा पनि बिदा नपाउने जागिर किन खानुपऱ्यो ?

उसमाथि ३७ वर्ष पुगेको घाटाको जागिर ! तलबभन्दा अरु अपेक्षा नराख्ने मैले के पाउनु छ र ? एउटा बिरामीले बिदा पाउँदैन भने किन जागिर खानु ? मन्त्रालयका केही साथीसँग सल्लाह गरें, जागिरबाट राजीनामा दिनेसम्बन्धमा । उहाँहरूको सल्लाह रह्यो- तत्काल नदिनु । उहाँहरूले नै त्यहाँबाट कम चाप नहुने ठाउँ राष्ट्रिय बिपद प्राधिकरणमा सरुवा मिलाइदिनुभयो । दरबन्दी बढी भएका साथीहरूलाई थन्क्याउने ठाउँ बनेको रहेछ विपद प्राधिकरण । केही महिनापछि त्यहाँबाट गृहको विभूषण शाखामा सरुवा भएँ र त्यहीँ कार्यरत रहँदा वैशाख १ मा बाँकी रहेका विभूषण बाँड्ने काम गरियो । दुर्घटनापछिको शारीरिक पीडाले भन्दा पनि मप्रतिको व्यवहारले गृह मन्त्रालय छाड्ने मुडमा पुगिसकेको थिएँ । निजामती वृत्तभित्र गर्नुपर्ने जिम्मेवारीका रूपमा कहीँ-कतै नलेखिएको तर गर्नैपर्ने चाकडी नगरेको, कतिपय विसंगति, विकृतिविरुद्ध बोलेको कारण कोपभाजनमा परें । तर, साथीहरूकै सल्लाहले राजीनामा नदिई जागिरमा अडिरहेको छु । महिना दिनदेखि गृहबाट प्रधानमन्त्री तथा मन्त्रिपरिषद् कार्यालयको निजी सचिवालय (सम्पर्क शाखा) मा कार्यरत छु ।

दैनिक ५३ किमि पार गरेर बनेपादेखि अफिस आउने, जाने गरिरहेको छु । साथीहरू भन्छन्, यतै एउटा कोठा लिएर बस्नु किन दु:ख बेसाइरहेका छौ तर परिवारसँग टाढा कोठा लिएर बस्न मन लागेन । उसो त मलाई सिंहदरबारभित्र बसेर जागिर खाने मन छैन । सिंहदरबार पहुँच हुनेहरूको ठाउँ हो । म पहुँचविहीन नागरिकको सेवा गर्न चाहन्छु, जिल्ला र दूरदराजमा बसेर । जिल्लामा रहेर काम गर्ने सोचकै कारण भूमिव्यवस्था सहकारी तथा गरिबी निवारणमन्त्री शशी श्रेष्ठले उहाँको सचिवालयमा रहेर काम गर्न गर्नुभएको अनुरोधलाई स्विकार्न सकिएन । चाकडी, चाप्लुसी निजामती सेवाको ३७ वर्षमा कहिल्यै नसिकेको सेवानिवृत्त हुने बेला मैले सिकेर चाकडी खोज्नेहरूलाई रिझाउने त कुरै भएन । यी केही तीता-मीठा अनुभव सँगाल्दै दुर्घटनापछिको शारीरिक अशक्तताका कारण मोफसलका भुइँमान्छेलाई सेवा दिई उहाँहरूसँगै रम्ने इच्छालाई अब मैले निरन्तरता दिन नसक्ने भएको अवस्थाप्रति क्षमाप्रार्थी छु । तथापि म निजामती सेवामा रहँदा वा सेवानिवृत्त भएपछि पनि चिनेका वा नचिनेका जो कोही प्रियजनलाई जाने बुझेका कुरामा साथ सहयोगका लागि सदा तयार छु ।

*- हरिगोपाल कर्माचार्य, शाखा अधिकृत*



## जीवनको रंग





हरि गजुरेल

# गैंडाले फेरि भेट्टाए गुरुबा

६ वर्षअगाडि गुरुबा र गुरु आमासँग तोडिएको सम्बन्ध जोडेका छन् गैंडाले । टुटेको सम्बन्धलाई नयाँ सिने हलले जोडेको हो पार्टनरको रुपमा ।

झण्डै साढे दुई दशकदेखि को हो, निर्मल शर्मा 'गैंडा' र दीपकराज गिरी, दीपाश्री निरौलाबीचको सम्बन्ध । कुनै समयको लोकप्रिय टेलिचलचित्र 'तीतो सत्य'बाट दीपक र दीपाले नै 'गैंडा' उपनाम दिएका थिए । उनै निर्मलले दीपक र दीपालाई 'गुरु बा र आमा' मान्दै आएका छन् । टेलिशृंखला हुँदै जोडिएको सम्बन्ध ठूलो पर्दाका '६ एकान ६, वडा नम्बर ६ र छक्का पञ्जा' सम्म जारी रह्यो । छक्कापञ्जा एकको निर्माता र अभिनेतासमेत रहेका उनी दोस्रो र तेस्रो सिक्वेलमा सहभागी भएनन् बरु ०७४ सालपछि दीपकराज र दीपासँग देखिन छाडे । कुनै यस्तो पनि समय थियो जहाँ धुर्मुस अर्थात् सीताराम कट्टेल, माग्ने बूढा अर्थात् केदार घिमिरेदेखि जितु नेपालसम्मका हाँस्यकलाकारलाई समेटेर दीपकराज गिरी र दीपाश्री निरौलाले '६ एकान ६' बनाए । चलचित्र सुपर हिट भयो । पैसा मनग्यै कमायो पनि । यही समूहले 'वडा नम्बर ६' बनायो । त्यहाँ धुर्मुस अटेनन् । 'छक्का पञ्जा' बनाउँदा निर्मल शर्मा (गैंडा) सो समूहमा अटेका थिएनन् । सोही समयदेखि उनीहरूबीचको सम्बन्धमा तिक्तता आएको बताइएको थियो अब विगतको तिक्तता पानी परेपछिको आकाश खुलेझैं बनेको बताइएको छ ।

गैंडा अब 'गुरु बा र आमा'सँग सहकार्यमा फर्किएका छन्, फिल्म हलको पार्टनर बनेर । गत नयाँ वर्षमै शुरु हुने भनेको दीपा दीपक, निर्मल शर्मा टीमको फिल्म हल पाँच महिना ढिला गरी अस्ति बानेश्वर चोकस्थित एनबी कम्प्लेक्समा उद्घाटन गरिएको छ । झण्डै १० करोड लगानीमा खोलिएको यो सिनेमा हलमा दीपकसँगै दीपाश्री निरौला, निर्मल शर्मालगायत 'छक्का पञ्जा' टिमको कम्पनीको लगानी रहेको बताइएको छ । जसको व्यवस्थापन नेपालको दोस्रो ठूलो मल्टिप्लेक्स चेन आईएनआईले व्यवस्थापन गरेको छ । आइएनएसले नयाँ बसपार्कको ल्होत्से मल र बुटवलको मिलनचोकमा गरी दुई वटा हल सञ्चालन गरिरहेको छ । योसहित उसको तीन वटा हल सञ्चालन शुरु भएको छ । दुईवटा स्क्रिन रहेको सिनेमा हलमा ३८७ सिट छन् ।

भूकम्प र कोरोनासँगै पाँच दर्जनभन्दा बढी हल भत्किएका छन् । कोभिडपछि केही सिनेमा घर भत्किए । जसमध्येको एक हो बौद्धमा अवस्थित सिद्धार्थ सिनेमा मन्दिर । दुई रोपनी जग्गा भाडामा लिएर २९ वर्षअघि



गोपालकाजी कायस्थले सञ्चालनमा ल्याएको सिनेमा मन्दिर अहिले भत्किसकेको छ । कोटेश्वरस्थित पुष्पाञ्जली हल भने भत्काइएको हो । काठमाडौंभित्रका पुराना सिने मन्दिर जय नेपाल, कुमारी सधैंका लागि बन्द भए । जय नेपाल नेपालकै जेठो सिनेमा घर हो । अब त्यसको इतिहास पनि भत्किएको छ । यसरी भत्काइएकोमध्ये केही गोदाम घरमा परिणत भएका छन् । कुनै समय सात वटा हल भएको गोपीकृष्णका चार वटा घर भत्काइएको छ । पुराना सिनेमा घरहरू भत्काइने क्रम चलिरहँदा कीर्तिपुरमा नयाँ फिल्म हल सञ्चालनमा ल्याए फिल्मकर्मी नरेन्द्र महर्जनले, २० करोड लगानी गरेर । पाँगामा एक सोमा २८५ दर्शकले हेर्न मिल्ने गरी 'कीर्तिपुर सिनेप्लेक्स' सञ्चालन भएको हो । यसैमा दीपक, दीपा र निर्मल शर्माको अर्को नयाँ सिनेमा मन्दिर थपिएको छ ।

## • नेपाली फाइटरले रसियनलाई हराए

मार्सल आर्टस् विश्वभरका प्रसिद्ध खेलमध्ये एक हो । यसका अनेकन विधा छन् । सबै विधाको आ-आफ्नो विशेषता छ । अहिलेको युवापुस्तामा यो खेल एकदमै लोकप्रिय छ । तर, यो खेल खेल्दा निकै सावधानी अपनाउनुपर्छ । मार्सल आर्टस् खेल्ने क्रममा गम्भीर चोट लाग्न सक्छ भने ज्यान जाने जोखिमसमेत रहन्छ ।

मार्सल आर्टस्को सबैभन्दा खतरनाक विधा मिश्रित मार्सल आर्टस् (एमएमए) हो । यसमा स्ट्राइकिङ, ग्रेपलिङ र ग्राउण्ड फाइटिङ समावेश छ । विश्वभरका विभिन्न लडाइँको खेललाई समावेश गरेर एमएमए बनेको हो । नेपालमा यो खेल खासै खेलिँदैन । यसबारे अधिकांशलाई जानकारी नै छैन । सरकारी संयन्त्रबाट खेलको वृत्तिविकासका लागि लगानी गरिएको छैन । अन्तर्राष्ट्रिय स्तरमा निकै चर्चा पाएको खेललाई नेपालमा स्थान बनाउन निकै लामो समय लाग्ने देखिन्छ । एमएमए खेल्ने जनशक्ति नभएकाले पनि मुलुकमा यो खेलले स्थान पाउन नसकेको हो । एमएमए खेल्दै आएकाले पनि घरपरिवार र सरकारबाट साथ-सहयोग नपाएको अवस्था छ ।

बझाङका २४ वर्षीय रवीन्द्र ढाँट एमएमएको नेपाली स्टार हुन् । एशियाकै शीर्ष कम्ब्याट प्रतियोगिता वन च्याम्पियनसिपमा प्रतिस्पर्धा गरेका उनले नेपाललाई गौरवान्वित बनाएका छन् । गत महिना नेपालमा सम्पन्न नेपाल वारियार्स च्याम्पियनसिपको मेन इभेन्टमा भारतीय फाइटरलाई हराएर वन च्याम्पियनसिपमा पुगेका उनले रुसका




फाइटरलाई पराजित गरेर अन्तर्राष्ट्रिय स्तरमा नेपालको झण्डा फहराएका छन् । थाइल्याण्डको बैंककमा गत हप्ता सम्पन्न खेलमा उनले रुसका फाइटर तोरेप्ची डोंगोनलाई तेस्रो राउण्डमा (टेक्निकल नकआउट) गरी जित हासिल गरेका हुन् । नेपाली एमएमए क्लब (लक एण्ड रोल) का प्रशिक्षक दिविज पियाको सहयोगमा उनी त्यहाँसम्म पुगेका थिए ।

बझाङ स्थायी घर भएका रवीन्द्र निम्न आर्थिक स्तर भएको घरपरिवारमा जन्मिए । माध्यमिक शिक्षा उत्तीर्ण गर्नेबित्तिकै कामको खोजीमा भारत पुगेका उनले जागिर सँगसँगै कराँते सिक्न थाले । त्यसको केही समयपछि नयाँदिल्लीमा एमएमएको अभ्यास शुरु गरेका उनले भारतमा अमेच्योर खेल खेले । केही वर्षदेखि उनले (लक एण्ड रोल) का प्रशिक्षक दिविज पियाको दिशानिर्देशमा रहेर मार्सल आर्टस् सिक्दै आएका छन् । भारतमा पनि केही प्रतियोगिता जितेका उनले वन च्याम्पियनसिपको यात्रा तय गर्नु मुलुकका लागि गौरवको कुरा हो ।

云南日报
YUNNAN DAILY PRESS GROUP
报业集团

CHINA · YUNNAN

澜湄传媒™
Mekong News Network

Issue No. 1 | JANA AASTHA NATIONAL WEEKLY | वर्ष २९, अंक २९, २०८० साल असोज ३ गते बुधवार YEAR 29, ISSUE 29, SEPTEMBER 20, 2023 

# चीन-दक्षिण एशिया एक्स्पोबाट नेपाल-चीन व्यापार प्रवर्द्धन हुने आशा राखेका छौं : नेपालका उपराष्ट्रपति

**सहयोग**

'चीन-दक्षिण एशिया एक्स्पोले नेपाली उत्पादनहरू चिनियाँ बजारमा प्रवेश गर्नलाई सहज बनाउने, दुई देशबीचको व्यापार सम्बर्द्धन गर्ने र लगानी विस्तार गर्ने अपेक्षा गरिएको छ ।' अगस्ट १६ का दिन खुनमिङमा सातौँ चीन-दक्षिण एशिया एक्स्पोको उद्घाटन तथा नेपाल थिम अर्थात् शीर्षक देशको भवन उद्घाटन समारोहमा नेपालका उपराष्ट्रपति रामसहाय प्रसाद यादवले भने- नेपाल र चीनबीच राजमार्ग, रेलमार्ग, सीमावर्ती पूर्वाधार र व्यापार आदानप्रदानका क्षेत्रमा सहकार्य प्रवर्द्धन गर्न सकिन्छ र नेपालमा सञ्चार प्रविधि, विनिर्माण, ऊर्जा, वास्तु र उच्च वैज्ञानिक प्रविधि उद्योगमा लगानीका लागि चिनियाँ लगानीकर्तालाई आमन्त्रण गरिएको छ ।

पाँच दिने यस वर्षको चीन-दक्षिण एशिया एक्स्पोमा, जम्मै ३४२ लगानी परियोजनाहरूमा हस्ताक्षर गरिएको छ र यसको कूल लागत ४ खर्ब १२ अर्ब ६५ करोड ४ लाख चिनियाँ युआन हुन आउँछ । यस वर्षको चीन-दक्षिण एशिया एक्स्पो कोभिड-१९ महामारीपछि पहिलो पटक पूर्ण रूपमा अफलाइन आयोजित भएको हो र ८५ देश, क्षेत्र र अन्तर्राष्ट्रिय सङ्गठनका प्रतिनिधिहरू र अतिथिहरूलाई आकर्षित गरेको छ । अनलाइन र अफलाइनका प्रदर्शनीमा ३० हजारभन्दा बढी व्यापार कम्पनीहरूको सहभागिता थियो । तीमध्ये ७० वटा नेपाली व्यापार कम्पनीले करिब १०० बुथ बनाएका थिए । 'यस वर्षको चीन-दक्षिण एशिया एक्स्पोको थिम देश नेपाल थियो, धेरै नेपाली व्यापारीहरू यो एक्स्पोसँग अपरिचित छैनन्, सबैको विचारमा, यो उत्तम प्लेटफर्म र अवसर हो,' नेपाल-चीन वाणिज्य सङ्घका अध्यक्ष अनुप भट्टराईले भने । उनले चीन-दक्षिण एशिया एक्स्पोले नेपाली उद्यमीहरूलाई चिनियाँ उपभोक्ता बजारसँग अझ राम्रो चिनाजानी गर्न एउटा ढोका पनि खोल्ने बताए ।



पहिलोदेखि सातौँ एक्स्पोसम्म प्रदर्शनी हलहरूको संख्या ६ देखि १५ सम्म बढेको छ, प्रदर्शनी क्षेत्र ५१ हजार १ सय वर्गमिटरदेखि १ लाख ५० हजार वर्गमिटरमा वृद्धि भएको र मेलामा सहभागी देश, क्षेत्र र अन्तर्राष्ट्रिय सङ्गठनहरूको संख्या ४२ देखि ८५ सम्म बढेको, जसबाट चीन र दक्षिण एशियाली देशहरूबीचको आर्थिक र व्यापारिक सहयोगको निरन्तर वृद्धि भएको छ ।

२०१३ सालमा 'बेल्ट एण्ड रोड' पहल प्रस्तावित भएपछि पहिलो चीन-दक्षिण एशिया एक्स्पो खुनमिङमा भयो । त्यसबेला चीन र दक्षिण एशियाका देशहरूबीचको कूल व्यापार १ खर्ब अमेरिकी डलरभन्दा कम थियो भने २०२२ मा यो आँकडा २ खर्ब अमेरिकी डलरको हाराहारीमा रह्यो । चीन दक्षिण एशियाली देशहरूको मुख्य व्यापारिक साझेदार हो र लगातार धेरै वर्षदेखि पाकिस्तान, बङ्गलादेश, माल्दिभ्स र अन्य देशहरूको सबैभन्दा ठूलो व्यापरिक साझेदार पनि हो । *(युन्नान डेली)*

*सातौं चीन-दक्षिण एशिया एक्सपोअन्तर्गत नेपाल थिम मण्डप उद्घाटन समारोहमा नृत्य प्रस्तुत गर्दै नेपाली कलाकार । तस्बिर : युन्नान डेली*

**व्यक्तित्व**

## फ्रान्सेली गिल डाली शहरमा 'जरा' सहितको जिन्दगी जिउँदै

सन् २००५ सालमा फ्रान्सेली गिल चीन आएर बेइजिङमा ४ वर्ष अनि छेङदुमा ५ वर्ष बसे । २०१४ मा उनी युन्नानको डाली शहरको फानचु गाउँमा आएर एउटा निजी रेस्टुरेन्ट खोले । फानचु गाउँ बाई जातिको एक अतिसुन्दर प्राचीन गाउँ हो । गिलले बाईहरूको पुराना घर भाडामा लिएका छन्, जुन लगभग १०० वर्षको इतिहासको छ र घरबाहिर तरकारी खेती गर्न छ-सात सय वर्ग किलोमिटरको जमिन छ ।

जब मौसम राम्रो हुन्छ, गिल बिहानको शान्त समयमा केही चिया पिउँछन्, केही खाना खान्छन्, किताब पढ्छन् र कहिलेकहीँ केही लेख्छन् । त्यसपछि पिठ्युँमा टोकरी बोकेर तरकारी किन्न बजार जान्छन्, चिनियाँ भाषामा पसलेहरूसँग मोलतोल गर्छन् । गिलको निजी रेस्टुरेन्टमा मेनु छैन, अतिथिहरूले अग्रिम बुक गर्न आवश्यक छ । गिलले आफ्नो मुडअनुसार अतिथिहरूलाई सत्कार गर्छन्, सामान्यतया हप्तामा २ पटकभन्दा बढी छैन, प्रत्येक पटक कम्तीमा ८ जना छन् । अपरिचित अतिथिहरू पनि सँगै बस्नुपर्छ, यसैले एक-अर्कालाई चिन्न पाउँछन् । गिल पनि तिनीहरूसँग गफ गर्छन् । गिलको घरमा डिनर गर्ने अधिकांश पर्यटकहरू, कलाकारहरू वा शिल्पकारहरू हुन्, जो डालीमा बसाइँ सरेका छन् ।



*तस्बिर : झाओ जियाउन*

स्थानीयहरू पनि उनका अतिथि हुन् । तरकारी किन्ने र पकाउने क्रममा उनले धेरै स्थानीय साथीहरूलाई चिनेका छन् । उनका धेरै साथीभाइ ५० वर्ष काटेका किसान र गाउँका शिक्षक छन् । तिनीहरू एक-अर्कालाई भेट्न जान्छन्, भुटेको चिया पिउँछन्, चाडपर्वमा सँगै खान्छन् ।

गिलले फानचु गाउँमा अपनत्वको भावना पाए । उनले भने, 'म संसारका धेरै ठूला शहरहरू गएको छु, तर मलाई सधैँ लाग्छ कि यी ठाउँहरू चौबाटो जस्तै हुन्, मानिसहरू आउँछन् र जान्छन्, कुनै जरा (मूल) छैनन् । फानचु गाउँ एक शान्त टापु हो, जहाँ तपाईं यस्तो जीवन बिताउन सक्नुहुन्छ जुन भूमिसँग सम्बन्धित छ र जरा पनि छ ।' गिलको विचारमा फ्रान्सेली जस्तै चिनियाँहरूको खानासित गहिरो सम्बन्ध छ । यो सम्बन्ध भूमिप्रति मानिसहरूको अपनत्वको भावनामा आधारित छ । मानिसहरू खाना जस्तै जहाँ गए पनि आफ्ना छापहरू लिएर जाने छन् । *(पाइक-खाद्य )*

**मित्रता**

## खुनमिङ र पोखराले हातेमालोमार्फत 'गतिशील र स्थिर' सहकार्य गरुन्

२०१३ सालको जुलाई ८ तारिख, युन्नान प्रान्तको खुनमिङ शहर र नेपालको पोखराबीच औपचारिक रूपमा भगिनी सम्बन्ध स्थापना भएको थियो । त्यसयता दुवै पक्षले खेलकुद, संस्कृति, पर्यटन, स्वास्थ्य, शिक्षा र अन्य क्षेत्रमा फलदायी र व्यावहारिक सहकार्य गर्दै आएका छन् । आज दुवैले संयुक्त रूपमा 'गतिशील र स्थिर' आदानप्रदान र सहकार्यमा हिमालयपार मित्रताको नयाँ अध्याय लेखेका छन् । प्राचीनकालमा युन्नान चिया 'चिया-घोडा मार्ग' हुँदै नेपाल भित्रिने गर्दथ्यो । यो व्यापार गार्गले पहाड र नदी पार गरी सामान र मित्रता नेपालमा ल्याएको थियो । हाल हिमाल र तालहरू भएका यी दुवै शहरले पर्वतीय खेलको माध्यमबाट लोकप्रिय आदानप्रदान गरिरहेका छन् ।

सन् २०१३ देखि २०१८ सम्म 'खुनमिङ पाल्की हिमाल आरोहण दिवस', 'खुनमिङ इन्टरनेसनल प्लेटो हाफ म्याराथन' र 'खुनमिङ पाल्की हिमाल क्रस कन्ट्री च्यालेन्ज' जस्ता पठार खेलकुद प्रतियोगिताले पोखराबासीलाई सक्रिय सहभागी हुन आकर्षित गरेको थियो । नेपाली खेलाडीहरू युन्नानको पठार र हिमालमा रेकर्ड तोडेर आफ्ना शरीरको सीमालाई चुनौती दिँदा दुई शहरका जनताको मन अझै नजिक हुन पुग्यो ।

खेलकुद प्रतियोगिता सबै सहभागी हुने कुरा हो । सन् २०१९ को अक्टोबरमा पहिलो नेपाल (पोखरा) अन्तर्राष्ट्रिय माउन्टेन क्रस कन्ट्री रेस तथा पोखरा-खुनमिङ अन्तर्राष्ट्रिय मित्र शहर प्रतियोगिता पोखरामा सम्पन्न भएको थियो । खुनमिङका ४० भन्दा बढी खेलाडीहरू पोखराका पहाडी फाँटमा दौडधुप गरेका थिए भने पोखराका उत्साही गाउँलेले शानदार पहिरनमा सजिएर दुई देशको राष्ट्रिय झण्डा फहराउँदै खुनमिङ खेलाडीका लागि जयजयकार गर्दै फूलपात छरेर आशीर्वाद थापेर हौसला बढाएका थिए ।

वर्षौंदेखि दुवै शहरले एक-अर्कालाई मद्दत गरेका छन् र एकैसाथ कठिनाइको सामना गरेका छन् । २०१४ को नोभेम्बरमा खुनमिङले पोखरालाई दुई फायर ट्रक प्रदान गरेको थियो । २०१५ अप्रिलमा नेपालमा ८.१ स्केलको भूकम्प गएको थियो । खुनमिङ शहरले पहिलो समयमा आफ्नो चिन्ता र समवेदना पठायो । कोरोना भाइरस महामारीको समयमा खुनमिङले पोखरालाई धेरै पटक सहयोगको हात बढायो र पटक पटक स्वास्थ्य सामग्री हिमालपार गरेर पोखरामा पठायो ।

**थप सामग्री पढौँ**

खुनमिङ युन्नान प्रान्तको राजधानी हो, जुन युन्नानको मध्यभागमा अवस्थित छ । निम्न अक्षांशको पठारमा रहेकाले सबै मौसम वसन्तजस्तै 'वसन्त शहर'को सुनामले प्रसिद्ध छ । खुनमिङमा डियान्ची ताल, याङजोङहाई ताल जस्ता पठारका ताजा पानी तालहरू र धेरै साना-ठूला नदीहरू छन् र २२ सय वर्षभन्दा बढी इतिहास छ । *(युन्नान डेली)*

**अमूर्त विश्व सम्पदा**

## हकिङ्ग : हजारौँ वर्षको चाँदी कलाकौशल



*तस्बिर : म्यान यादी*

युन्नानको चाँदी सामान बनाउने प्रविधिमध्ये हकिङ्ग जिल्लाको सबैभन्दा प्रसिद्ध छ । स्थानीय क्षेत्रमा हजारौँ वर्षदेखि चलिआएको चाँदीका भाँडा बनाउने कौशल संरक्षित छ । यहाँका चाँदी-भाँडाका विविध आकार, विभिन्न प्रकार, उत्तम शिल्प र उच्च गुणस्तर छ । यिनका कलाकृतिहरू देशविदेशमा प्रसिद्ध छन् र चीनका विभिन्न प्रान्तमा, अमेरिका, जापान, भारत, मलेसिया, नेपाल, थाइल्याण्ड, पाकिस्तान र अन्य देशमा निर्यात गरिन्छ र विश्वभर प्रशंसा गरिन्छ ।

**चीनको जिल्लामा**

## सुआङफेङ, हुनान प्रान्त : सानो कृषि यन्त्रले ठूलो उद्योग बनाउँछ

हालसाल 'चीनको कृषि यन्त्रको गृहजिल्ला' नामक शुआङफेङ जिल्ला, हुनान प्रान्त नवीनताको विकास र औद्योगिक उन्नयनको माध्यमबाट पहाडी क्षेत्रमा कृषि यान्त्रिकीकरणको मागलाई लक्षित गरेर 'निपुण' र 'स्मार्ट' कृषि यन्त्र उद्योग शृङ्खलाको निर्माणलाई हाइलाइट गर्दै १० अर्ब युआनको औद्योगिक समूह बनाएको छ । यसको उत्पादनहरू चीनका २० भन्दा बढी प्रान्तमा र अफ्रिका, दक्षिणपूर्व एशियासहित २० भन्दा बढी देश र क्षेत्रहरूमा राम्रो बिक्री हुन्छन् । गत शताब्दीको ९० को दशकमा ३० वर्षभन्दा बढी समयदेखि फस्टाएको शुआङफेङ सरकारी कृषि यन्त्र कारखाना ऐतिहासिक चरणबाट पछि हटेको थियो । साना कृषि यन्त्रको सरल प्रविधि र फराकिलो बजारप्रति आशावादी भएका केही स्थानीयहरूले कृषि यन्त्र उत्पादनको जिम्मा लिए र कृषि यन्त्र कारखाना स्थापना गर्न थाले । केवल दुई तीन वर्षमा यस जिल्लामा २०० भन्दा बढी कृषि यन्त्र उत्पादन उद्यमहरू स्थापित भएका छन् ।

शुआङफेङ जिल्ला कृषि यन्त्र सेवा केन्द्रका निर्देशक लिउ याछ्युले बताए, समतल क्षेत्रमा प्रयोग गरिने ठूला कृषि यन्त्रको विपरीत, शुआङफेङ साना कृषि यन्त्रहरू मुख्यतया पहाडी क्षेत्रमा केन्द्रित रहेको र मूल्य पनि समान प्रकारका उत्पादनहरू भन्दा कम हुन्छन् । हालसाल ६० भन्दा बढी प्रजातिहरू र ३०० भन्दा बढी मोडेलहरू विकसित भएका छन् । खेती, रोपण, बिरुवा संरक्षण, कटनी, सुकाउने र भण्डारण लगायतका सम्पूर्ण प्रक्रियालाई समावेशी छन् ।

वर्तमानमा शुआङफेङ कृषि यन्त्रका केही अग्रणी उत्पादनहरू चिनियाँ बजारमा स्पष्ट फाइदा उठाएका छन्, चीनका २० भन्दा बढी प्रान्तहरू र 'बेल्ट एन्ड रोड' सम्बन्धित २० भन्दा बढी देशहरूमा राम्रो बिक्री हुन्छन् । सन् २०२२ मा जिल्लामा निर्दिष्ट आकार भएका कृषि यन्त्र उद्यमहरूले ८ अर्ब ६५ करोड ७० लाख युआनको उत्पादन र १२ करोड युआनको निर्यात गरेका छन् । *(सिसिटिभी)*

## युनेस्कोको सूचीमा समेटियो पहाडी चिया बगान



चीनको दक्षिण पश्चिम युन्नान प्रान्तअन्तर्गत पुअरको चिङमाइ पहाड ढाक्ने पुरानो चिया बगानलाई यही सेप्टेम्बर १७ का दिन युनेस्कोले विश्व सम्पदा सूचीमा सामेल गरेको छ । विशेष खाले चियामा आधारित यो पहिलो विश्व सम्पदा स्थल अवलोकनमा आउन हामी चिया पारखी स्वदेश तथा विदेशका साथीहरूलाई हार्दिक आमन्त्रण गर्दछौं ।

## विदेशी पत्रकारलाई एक शहर, दुई स्वाद

अगस्ट १७ देखि १९ सम्म इराक, जोर्डन, मोरक्को, प्यालेस्टाइन, नेपाल र भियतनाम ६ देशका पत्रकार समूह युन्नान प्रान्तको पुअर शहरमा गएर हजार वर्षको इतिहास भएको पुरानो 'चिया-घोडा मार्ग' अन्वेषण र 'बायाँ हातमा कफी, दायाँ हातमा चिया' आरामदायक जीवनको अनुभव गरे । पुअर चीनमा कफी उत्पादनको सबैभन्दा ठूलो क्षेत्रफल र मात्रा भएको, उत्तम गुणस्तरको एक क्षेत्र हो र कफी वितरण केन्द्रमध्ये पनि एक हो । सन् २०२२ मा पुअर कफीको रोपण क्षेत्रफल पैँतालिस हजार दुई सय एकड थियो र ५ लाख ५७ हजार टनको उत्पादन थियो, जुन चीनको कूल कफी उत्पादनको ५० प्रतिशतभन्दा बढी । 'मलाई कफीमा चिनी र दूध थप्न मन पर्छ र हालका दिन म पुअरमा कफी पिउँदा केही पनि थप्दिनँ, कफीको मूल स्वाद यति राम्रो छ भन्ने सोचेकै थिइनँ,' भियतनामी पत्रकार रुअन छुइचुआङले भने ।

पुअर कफीको मिठो स्वाद चाख्दै गर्दा विदेशी पत्रकारहरूले पनि पुअर चिया र पर्यटन एकीकरणको मजा लिए र पुअरमा 'एक शहर, दुई स्वाद' को आनन्ददायक जीवनको अनुभव गरे । इराकी पत्रकार अलीले पुअरमा पहिलो पटक आएको, पुअर चियाको गहिरो संस्कृति र कफी बनाउने कला एकदम मन परेको र साथीभाइहरूलाई चीनमा बोलाएर एकैसाथ अनुभव गर्न मन लागेको बताए । 'चिया-घोडा मार्ग'ताका चीन र नेपालबीच चियाको व्यापार बारम्बार हुने गर्दथ्यो । आज 'बेल्ट एन्ड रोड'मा जोडिएको नेपालसँग व्यापार र सहयोग अझै घनिष्ठ भएको छ । चियाले नै दुई देशको आर्थिक विकासलाई प्रेरित गरेको छ; अनि फेरि चियाले नै दुई देशको सांस्कृतिक आदानप्रदान र संस्कृतिको पारस्परिक शिक्षालाई बढावा दिएको छ ।' नेपाली पत्रकार सरिताले चीनको चिया संस्कृति आफ्नो देशसँग साझेदारी गर्न पाउँदा खुशी लागेको बताइन् । *(लि लिङ/ लि च/ वाङ जिङजोङ)*



*नेपाली पत्रकार पुअरको लाइभ स्ट्रिमिङमा ।*

*तस्बिर : वेन जिन*

**युन्नान शैलीको जीवन**

## विदेशबाट...

हङकङ पठायो। उनी गए, कुरा बुझे, खालि हात फर्किए। त्यहाँ परराष्ट्रमार्फत पारस्परिक कानुनी सहायताका लागि चिठी गएको थियो। तर, पत्र ढिलो पुग्नाले रित्तो फर्किनुपर्‍यो। तर, त्यहीँका डिएसपी धर्मराज भण्डारीको टोलीले सोही प्रकरणपछि भारतमा लुकेर बसेका सुमन खरेल र किशोर बस्नेतलाई समातेर ल्यायो। यस्तो हुनुको कारण हो, भारतसँग व्यक्तिगत पहुँच बन्न सक्यो, चीन वा हङकङसँग त्यो सम्भव भएन। नत्र, दिनेशले पनि एक भारी मान्छे बोकेर ल्याउँथे होलान्।

त्यसमाथि एमएलएले मानिस झिकाउन हैन, कागजात झिकाउनमात्रै मद्दत पुर्‍याउँछ। आधिकारिक रूपमा मानिस झिकाउन त सुपुर्दगी सन्धि गरिएको हुनुपर्छ। भारतसँग उक्त सन्धिको मस्यौदा आदानप्रदान भएको छ, सन्धि नै चाहिँ भइसकेको छैन। सन् १९५३ मा पारस्परिक कानुनी सहायता सम्झौतासम्म भएको थियो। चीनसँग सुपुर्दगी सन्धि गर्ने-गर्ने भन्दै एमएलएसम्म गरियो। फलतः अहिले अप्ठेरो परेको छ। मानौं, अपराधी आदान प्रदान गर्ने अनौपचारिक विधिलाई कुनै देशले मानिदिएछ भने 'त्यताबाट दिने भए यताबाट पनि दिने' भन्ने कुरा आउँछ। अर्थात्, देशले दिन नचाहेको व्यक्ति पनि विदेशीलाई दिनुपर्ने मजबुरीमा परिन्छ। प्रहरीले त्यसरी अहिले पनि ५०-६० देशमा मान्छे ल्याउने, लैजाने भइरहेको छ। त्यसैले गर्न सक्दा सुपुर्दगी सन्धिभन्दा एमएलए सजिलो हो। सन्धि भनियो भने युएन कन्भेन्सन, मानवअधिकारजस्ता प्रश्न तेर्सिन्छन्। अनुसन्धान गर्ने २५ दिनभित्र मान्छे नभेटिँदा पनि निश्चित दिनमा मुद्दा अदालत पुग्छ र पक्राउ गर्न बाँकी व्यक्तिलाई फरारका रूपमा राख्ने, भेटिएको बेला पेश गर्ने उपाय हुन्छ।

विश्वका अन्य मुलुकमा झैँ नेपालमा पनि प्रविधिको प्रयोगबाट हुने अपराधको संख्या बढ्दो छ। सामाजिक सञ्जालमध्ये फेसबुक, ह्वाट्सएप, टिकटक, भाइबर, इन्स्टाग्रामको माध्यमबाट हुने अपराधको अनुसन्धान गर्नुपर्ने भयो भने सीधै तिनका मुख्यालयसँग पत्राचार गरिन्छ। पत्राचारको प्रक्रिया नै लामो छ। त्यसमाथि पठाइएको पत्रअनुसारको जवाफ वा सहयोग आउने-आउने टुंगो नहुने, आइहालेछ भने पनि अनुसन्धानको म्यादभित्र आइपुग्नै गाह्रो ! फेसबुकले दक्षिण एसियाली मुलुकलाई लक्ष्य गर्दै सिंगापुरमा आफ्नो कार्यालय राखेको छ। अमेरिकास्थित मुख्यालयले सहयोग नगर्दा सिंगापुर प्रहरीलाई कन्याउनुपर्ने बाध्यता छ। अमेरिकी र पश्चिमा मुलुकका प्रविधिसँग कम्तीमा घुमाउरो पाराले पहुँच त छ, तर चीनद्वारा प्रवर्धित वीच्याटको त अत्तोपत्तो छैन।

यदि नेपालले भएजति दूतावासमा प्रहरी सहचारी राख्न सकेको भए अपराध अनुसन्धानका कतिपय मामिला सहज हुन्थे। तर, भारतमा एकजना एसएसपी दर्जाका अधिकृतबाहेक कुनै देशमा त्यस्ता सहचारी छैनन्। त्यसमाथि नेपालमै भएका कतिपय कसुरदार चाहिएको समयमा भेटिँदैनन्। अख्तियारका पूर्वप्रमुख दीप बस्न्यात ललिता निवास प्रकरणमा मुछिए। अनुसन्धान गर्नुपर्ने बेला हुँदा भागिसकेका थिए। अहिले कहाँ छन् ? कुनै अत्तोपत्तो छैन।

## सेनाका...

तारीमा परेका छन्। त्यस्तै, बहालवाला सैनिक नेतृत्वले संस्थाका भूपू र रथीलाई बेवास्ता गर्ने क्रमको निरन्तरता जारी छ। पहिला पहिला 'ट्र्याक टु' भनेजस्तो अनौपचारिक तवरले समन्वय हुन्थ्यो, अहिले त्यस्तो पनि भइरहेको छैन। भूपू रथिहरूसँग प्रधानसेनापतिको तर्फबाट दुई-तीन हप्ताको अन्तरमा अनौपचारिक तवरले समन्वय हुने गरेको थियो। सशस्त्र र प्रहरीमा पनि त्यस्तो हुने गरेकै छ। शशीभवनमा भने चियापान र खाजाका जमघट पनि रोकिएको गुनासो छ। सेनाका बारेमा बाहिर संख्या र सुविधा कटौतीसहितका अनेकन विवाद र टिप्पणी आइरहेका छन्। ती विषयमा थुप्रै पूर्व जर्नेलले लेख लेखे, अन्तर्वार्ता र भाषण गरे। तर, भित्र कुनै चालचुल छैन। यस्ता विषयमा पूर्णचन्द्र थापाको कार्यकालमा धर्मपालवरसिंह थापाले विज्ञप्ति निकालेरै समर्थन जनाएका थिए।

उता, पूर्णचन्द्र र अर्का पूर्वप्रधानसेनापति गौरवसमशेर राणाबीच तिक्तता कायमै छ। त्यसो त बढी मानिस जम्मा भएका ठाउँमा पूर्णचन्द्र जाने गर्दैनन्। त्यसो त सैनिक जनशक्तिको जागिर सकिए पनि देशप्रतिको जिम्मेवारी सकिएको मानिँदैन। विदेशतिर अवकाशप्राप्त सैनिक अधिकारीलाई रिजर्भ फोर्सका रुपमा व्यवहार गरिन्छ। अवकाश पाएका जर्नेलहरूले मिडियामा बोल्नु र एकै ठाउँ जम्मा धारणा बनाउनुले धेरै फरक पर्ने सुझाव अहिलेका प्रधानसेनापति प्रभुराम शर्मालाई धेरैले दिइसके, तर नसुनेझैं गरिएको छ। जागिरबाट अवकाश भए पनि उनीहरूले सेवा, सुविधा पाइरहेकै हुन्छन्। स्वास्थ्य सेवा लिइरहेका हुन्छन्। भनिन्छ, भूपूलाई तालिम दिनेका रुपमा राख्न सकिन्छ। सेनाविरुद्धका कुरा आउन थाल्दा तिनीहरूलाई प्रतिरक्षामा उतार्न सकिन्छ। ती काम गर्न केन्द्रीय भूपू सैनिक संगठन पनि छ। तर, प्रहरीको जस्तो सक्रिय छैन। रेशम चौधरीको रिहाईअघि प्रहरीहत्यामा संलग्न भएको भन्दै भूपूमहानिरीक्षकहरूले प्रधानमन्त्री र गृहमन्त्रीलाई भेटेर नछोड्न दबाब दिएजस्तो सेनाका भूपूहरूमा एकता छैन। बरु, उनीहरू राजनीतिक दलका टिकटमा चुनाव लडेका छन्। कुमार फुदुङ माओवादीतिर लागे। तर, धेरैजसो राप्रपामा छन्। पहिलादेखि नै राजाको सिन्दुर लगाएको भन्ने मानसिकताका कारण सेनाहरू राजावादी हुने गरेका हुन्। पेन्सन खाएर नेता, दललाई गाली गर्नेलाई प्रधानसेनापतिले चाहँदा पेन्सन काटिन सक्छ। अर्कोतिर, प्रधानसेनापति प्रभुराम थापा आवश्यकताभन्दा बढी नै शीतल निवास जाने गरेको बताइन्छ। उनका भाइ लक्ष्मीनारायण शर्मा काठमाडौंस्थित नागार्जुन नगरपालिका- ४ (सीतापाइला) मा कांग्रेसबाट निर्वाचित वडाध्यक्ष हुन्। ०७४ मा एमालेका कृष्णकुमार बलामीसँग हारेका लक्ष्मीले गतवर्ष बलामीलाई नै हराएर जितेका थिए।

## शंकरमार्फत...

सचिव युआन जियाजुनले भने राजनीतिक सन्दर्भमा खासै केही भनेनन्। उनी चिनियाँ कम्युनिष्ट पार्टीका २५ पोलिट्ब्युरो सदस्यमध्ये प्रभावशाली मानिन्छन्। च्छोङछिङ त्यही शहर हो, जहाँ वर्तमान राष्ट्रपति सि चिनफिङका प्रतिस्पर्धी मानिने बोसीलाई बर्खास्तीमा परेका थिए। बेइजिङको भेटमा शंकरले नक्साको प्रसंग उठाए। 'नेपालले जारी गरेको नक्सा सिंगो संसदले पारित गरेको हो। चीनले यसलाई बुझ्नुपर्छ', उनले भने। यसबारे जियाजुनले सीधै केही भनेनन्, बुझेको भाव झल्काए। स्मरणीय छ, सन् २०१५ मा चिनियाँ प्रधानमन्त्री लि खछ्याङ भारत जाँदा नेपाली भूमि कालापानी, लिपुलेक र लिम्पियाधुरालाई भारतकै बुझिने गरी सम्झौता भएको थियो। लिपुलेकबाट चीन र भारतले व्यापारिक कोरिडोर बनाउने कुरामा दुई शक्तिकेन्द्र मिलेका थिए। त्यसैबेला नेपालको तर्फबाट चीनलाई डिप्लोम्याटिक नोट पठाइयो। पछि उक्त भूमि समेटेर नक्सा नै जारी भयो।

त्यस्तै, ३० देशका १ सय ५० प्रतिनिधिसहित छिङहाई प्रान्तको राजधानी सिनिङमा आयोजित 'चिनियाँ आधुनिकीकरणः मानवता र प्रकृतिबीचको सद्भाव' विषयक विश्व सम्मेलनमा शंकर प्रमुख अतिथि थिए। च्छोङछिङमा आयोजित स्मार्ट चाइना एक्स्पो-२०२३ मा पनि शंकर विशिष्ट अतिथिको लहरमा थिए। भेटका क्रममा उनले पार्टी अध्यक्ष तथा पूर्वप्रधानमन्त्री केपी शर्मा ओलीको चीन भ्रमण तथा राष्ट्रपति सि चिनफिङको नेपाल भ्रमणका समयमा भएका सन्धि, सम्झौता कार्यान्वयन हुनुपर्ने माग राखे। उक्त मागप्रति चिनियाँ पक्षले सकारात्मक चासो राखेको थियो। उनले आफ्नो देशबाट प्रधानमन्त्री प्रचण्ड चीन भ्रमणमा आउन लागेको र त्यसबेला उच्च महत्त्वका साथ कुरा गर्न अनुरोध गरे।

भेटका क्रममा चिनियाँहरू नेपालमा भारतभन्दा अमेरिकी गतिविधि बढेकोमा चिन्तित देखिन्थे। हुन पनि, अमेरिकी परियोजना एमसिसीमा दिने भनिएजति पैसा दिन अप्ठ्यारो पर्ने तर नेपालले लगानी गर्नुपर्ने १३ मिलियन डलरमा बढेर हाल्नुपर्ने भएको छ। सडक, ट्रान्समिशन लाइनहरू भनेजति नबनाउने स्थिति छ। चीनलेचाहिँ एमसिसीभन्दा चार महिनाअघि हस्ताक्षर गरेको बिआरआई अगाडि बढाउनुपर्ने कुरामा जोड दिँदै आएको छ।

## चीनले...

केरुङ अन्तर्देशीय प्रशारण लाइन निर्माण गर्ने कुरा। यो पनि एजेण्डामा पर्‍यो कि परेन ? केही पत्तो छैन।

प्रविधिको क्षेत्रमा चीनले सञ्चार तथा सूचना प्रविधि मन्त्रालयअन्तर्गत रहने गरी अत्याधुनिक सुविधासम्पन्न नेशनल डाटा सेन्टर स्थापना गर्न चाहेको थियो। नेपालमा कोरियाली सहयोगमा आफ्नै डाटा सेन्टर खुलेको १० वर्ष भयो। सामानमात्रै भएर पुगेन, दक्ष जनशक्ति पनि हुनुपर्‍यो। त्योभन्दा बढी प्रभावकारी हुने डाटा सेन्टरका निम्ति चिनियाँ राजदूत छन् सोङले सञ्चार मन्त्री रेखा शर्मालाई नै अगाडि राखेर प्रधानमन्त्रीको भ्रमणको एजेण्डामा पार्न अनुरोध गरेका थिए। तर, नेपालको तर्फबाट त्यस्तो सहयोग लिन मानिएन। यससँगै साइबर सुरक्षामा पनि उसले सहयोग गर्ने भनेको थियो। तर, नेपालकै तर्फबाट कुरा अगाडि बढेन। सञ्चार मन्त्रालयबाट प्रस्ताव अगाडि बढ्ने, अर्थ र परराष्ट्र पुगेर अड्किने काम भयो भनिँदै छ। नेपालमा एउटा ब्रोडव्याण्डको कनेक्टिभिटी दक्षिणबाट छ, अब उत्तरबाट पनि ल्याउन पाए राम्रो हुने भन्दै सञ्चारले पहल गरेको थियो। शुरु-शुरुमा राम्रै कुरा हुँदै थियो, अहिले आएर डाटा सेन्टरले हावा खायो र आइटी एकेडेमी बनाउने नाममा सबै कुरा थान्को लगाइयो। आइटी एकेडेमी भनेको 'एक्सिलेन्स सेन्टर' भनेजस्तो त्यससम्बन्धी जनशक्ति उत्पादन गर्ने थलो हो। नेपालले ब्रोडव्याण्डको कनेक्टिभिटी रसुवाको बाटो भएर ल्याउन चाहेको थियो। सिंहदरबारस्थित पुरानो गृह मन्त्रालय हाताभित्र नेपालको आफ्नै डाटा सेन्टर (जिआइडिसी) छ। कोरियन सहयोगमा त्यहाँ काम भइरहेको छ। त्यसमा अर्कोलाई प्रवेश गराउने कुरा त्यति व्यावहारिक हुँदैन थियो होला। तर, यदि उत्तरी छिमेकबाट ब्रोडव्याण्ड ल्याउने प्रस्तावमा भाँजो नहालेको भए नेपालमा फाइभजी नेटवर्क विस्तार हुने थियो। तर, फोरजी नेटवर्क नै व्यवस्थित भएको छैन भन्दै त्यसलाई थन्क्याइएको बताइन्छ।

अर्को प्रस्ताव थियो, चिनियाँ मुद्रा रनमिनबी (आरएमबी) लाई मिडियम करेन्सीका रूपमा नेपालमा चलाउने। अर्जेन्टिना, ब्राजिल, रुस, इण्डोनेसिया, मलेसिया, फिलिपिन्स, सिंगापुरमा जस्तै नेपालमा आरएमबी प्रयोगमा आए दुईपक्षीय व्यापारमा प्रभावकारिता आउने उसको दाबी थियो। तर, नेपालकै तर्फबाट त्यसमा पनि चासो नदिइएको गुनासो सुनिन्छ।

## करणीकाण्डका...

भयो। ३५ बर्षीया कार्यालय सहयोगीलाई पटक पटक यौन शोषण गरेको, भरतपुर अस्पतालमा गर्भ फाल्नका लागि दबाब दिएको पर्दाफास भएसँगै उनी प्रहरी हिरासतमा छन्।

झापास्थित दमक नगरपालिकाको प्रमुख प्रशासकीय अधिकृत डमरु निरौलाले क्वार्टरभित्रै एक डिभोर्सी महिलासँग मदिरामा लठ्ठ भएर चुम्बन गरेको भिडिओ सामाजिक सञ्जालमा छरपष्ट भएसँगै २४ साउनदेखि बरण्डामा पुगेका छन्। डमरुको ठाउँमा सामान्यले उपसचिव गणेशराज कार्कीलाई खटाएको छ। इलामको माइजोगमाई गाउँपालिकाकी लेखा अधिकृत रेश्मा राईसँग कार्यकक्षमै 'रोमान्स' गर्ने प्रमुख प्रशासकीय अधिकृत काजीमान राई पनि सामान्यको जगेडामा छन्। रेश्मा भने कार्यालयको सम्पर्कमा नरहेको पालिकाले जनाएको छ। उनी स्थानीय कर्मचारी भएको कारण स्थानीय सरकारले नै कारवाही गर्न सक्ने सामान्य प्रशासनले जनाएको छ। यस्तै, ललिता निवास काण्डमा मुछिएका सुशील वैद्यलाई दाङको प्रमुख जिल्ला अधिकारीबाट सामान्यको अतिरिक्तमा हाजिर गराइएको छ। गृहले वैद्यको स्थानमा अध्यागमन कार्यालयबाट रामबन्धु सुवेदीलाई खटाएको भए पनि उनी हाजिर भइसकेका छैनन्। यस्तै सुन काण्डमा जोडिएका दावासँग कनेक्सन देखिएसँगै गृहले झलकराम अधिकारीलाई फिर्ता बोलाएर त्यहाँ रुद्रमान सिंह तामाङलाई खटाएको छ। अधिकारी सामान्य प्रशासनकै अतिरिक्तमा छन्। यसरी काण्ड र बदनामीमा मुछिएका कर्मचारीलाई केही महिना अतिरिक्तमा राखेर कारवाही टुंग्याउने हो भने निजामती सेवा झनै ध्वस्त हुने चिन्ता पोख्छन्, पूर्व सचिव गोपीनाथ मैनाली।

कुनै समय २ लाख राशीसहित सर्वोत्कृष्ट निजामती कर्मचारीको पुरस्कार थापे, सूर्यप्रसाद गौतमले। जबकि उनी कारबाहीको भागीदार हुनुपर्ने कार्यसम्पादनले देखाउँछ। शैक्षिक जनशक्ति विकास केन्द्रको कार्यकारी निर्देशक हुँदा आफैँले प्रश्न बनाए, श्रीमती इन्दिरा ढकालको कपी आफैँले जाँचे र एक नम्बरमा उत्तीर्ण गराए। त्यसयता ६ वर्ष भयो यो पुरस्कार वितरण गर्न छाडिएको। अस्ति २२ भदौमा पूर्वगृहमन्त्री बालकृष्ण खाँणको देब्रे हात मानिएका उपसचिव शोभाखर रेग्मीलाई निजामती पुरस्कारबाट सम्मानित गरिएको छ। खाँण जेलमा पुगेपछि उनी अहिले अर्को शक्तिकेन्द्र रक्षामन्त्री पूर्णबहादुर खड्काको सचिवालयमा पुगेका छन्।

उता सिके राउतको पार्टीले सम्हालेको सामान्य प्रशासनको कर्मचारी प्रशासन महाशाखा ताक्दै छन्, उपसचिव तेजनारायण यादव। प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयबाट सामान्यमा जम्प गर्ने गरी सेटिङ हान्दै गरेका। यादव यातायात कार्यालय एकान्तकुनाको प्रमुख हुँदा 'ट्रायल फेल' भएका २ सय ४ जनालाई लाइसेन्स दिएको अभियोगमा निलम्बनमा परेका थिए। विशेष अदालतले ०७७ फागुन १७ गते चोख्याइदिएपछि यातायात कार्यालय बुटवल पुगे। सचिव कुमार दाहाल प्रदेश सचिवकै रुपमा बुटवलमा थिए। उनको बदमासीमा अंकुश लगाउन खोज्दा उपसचिवले उल्टै प्रदेश सचिवको सरुवा गराइदिए। ०७९ चैतमा राजस्व अनुसन्धान कार्यालय पथलैया पुगेर पनि बदमासी जारी राखेका यादवविरुद्ध अकुत आर्जनको मुद्दा अख्तियार र सम्पत्ति शुद्धीकरणमा परेको छ तर उनले लोकसेवा तयारी पुस्तक लेखेरै ९० लाख कमाएको बयान दिएका छन्, ती निकायलाई।

यता, जनमत पार्टीका अध्यक्ष सिके राउतले उपसचिव यादवले सामान्य प्रशासनमा आउनका लागि बल गरिरहेको भए पनि उनको बदमासीबारे चाल पाएसँगै अब सामान्यको 'ढोका बन्द'भएको प्रतिक्रिया दिएका छन्।

## सानो...

रवि लामिछानेले खाडीतिर समस्यामा परेका केही युवालाई टेलिभिजनको पर्दामा ल्याएर त्यसबाट आफ्नो टिआरपी बढाउने व्यापारिक काम मात्रै गरेका थिए। तर यथार्थभन्दा धेरै पर रहेको उनको त्यो टिभी हल्लाले पनि जनताको मनलाई छोएछ। बालेनको जितको आधार पनि 'गरिबको चमेली' भन्ने गीत नै हो। एमाले, माके र एकीकृत समाजवादी पार्टी ठेकेदारसँग ज्यालामा नमिलेका मान्छेजस्ता देखिए। यिनीहरूले छुद्र स्वार्थमा अल्झिएर आदर्श लक्ष्यलाई भुल्ने काम गरे।

हामी नेपालीको निम्ति आजको दिनमा विकास के हो ? के कुरालाई विकास भन्ने ? हाम्रोनिम्ति विकास भनेको नहर निर्माण गरी सिञ्चाइको सुविधा दिनु विकास हो। उत्पादन भएका कृषिजन्य वस्तुलाई बजारसम्म पुर्‍याउन सडक निर्माण गर्नु विकास हो। स्वदेशी कच्चापदार्थमा आधारित साना उद्योग स्थापना गर्नु, ठूलो र धेरैभन्दा धेरै रोजगारी सिर्जना गरेर युवालाई काम दिनु विकास हो। देशले समृद्धि हासिल गर्ने बाटो पनि यही हो। हाम्रो दुर्भाग्य नै भन्नुपर्छ कि देशमा भएका सबैजसो उद्योग धन्दा या त बेचियो या बन्द भए तर एउटा पनि नयाँ उद्योग खुलेन। विकास भयो त ? भएन। विकास नभएपछि समृद्धि आउँदैन र जनता सुखी पनि बन्न सक्दैनन्। जनता कमजोर र दुःखी छन् अहिले पनि।

हाम्रो शिक्षा त झन् कस्तो छ भने बेरोजगार उत्पादन गर्ने कारखानाभन्दा फरक पर्दैन। ब्याचलर पास गरेर नोकरीमा जान चाहनेले के जागिर खाने ? केमिस्ट्रीमा डिग्री पास गरेको के मास्टर बन्नलाई हो र ? यी सबै हुनुका अनेकौं कारण होलान् तर मूल कारण भनेको कम्युनिष्ट नेतृत्वको अक्षमता नै हो।

देशको प्रधानमन्त्री कम्युनिष्ट पार्टीको सदस्य, मन्त्रीहरू पनि कम्युनिष्ट पार्टीकै सदस्य, मुख्यमन्त्रीहरू र प्रदेशका मन्त्री कम्युनिष्ट पार्टीकै हुँदा शिक्षा सुधार्न, स्वास्थ्य प्रणाली सुधार्न, कृषि सुधार्न, उद्योग खोल्न, बाटो बनाउन, नहर बनाउन सजिलो हुने थियो। एकजुट भएर काम गरेको भए विकास हुन र नेपाली जनताको आजको दिनको समृद्धिको अपेक्षा पूरा गर्न कुनै समय लाग्ने थिएन। मूल कुरा एकताको हो। ओली कमरेडले दम्भ त्याग्दै बार्दलीबाट ओर्लिने, माधव कमरेडले इख नराख्ने र प्रचण्डले सत्तालिप्सा त्यागेर देखाउने हो भने अझै पनि एकता गर्न सकिन्छ। विगतदेखि हुँदै आइरहेका कमीकमजोरी हटाउने र समाजवादी अवधारणाअनुसार विकास र समृद्धिको लक्ष्यलाई अघि बढाउन सक्ने हो भने घोषित गन्तव्यमा पुग्न हामीलाई कुनै समस्या हुने छैन र लामो समय पनि लाग्दैन। तर उहाँहरू त सिंगो रोटीलाई टुक्राटुक्रा पारेर खोसाखोस गरिरहनुभएको छ।

## श्रीमान...

उनीहरू पर्ने बताइन्छ। सर्वोच्चतर्फ रिक्त न्यायाधीशको हकमा कानुन मन्त्री धनराज गुरुङले तयारीको समय मागेको भनी प्रधानन्यायाधीश विश्वम्भर श्रेष्ठले 'अहिले नगरौं' भनेका थिए। तर, कानुन मन्त्रीले उच्च अदालतको न्यायाधीशमा एकजना पनि आफ्नो मान्छे सिफारिस गरेनन्। न्यायाधीश भएका कानुन व्यवसायीमध्ये पूर्णप्रसाद राजवंशी बारका पूर्वअध्यक्ष शम्भु थापाका शिष्य र अर्जुन अधिकारी चण्डेश्वर श्रेष्ठका हुन्। पहिल्यै सिफारिस गरिएकी पुण्यशीला दवाडी घिमिरे यसचोटि न्यायाधीश भइन्। उता, माओवादीतर्फबाट अहिलेका महान्यायाधीवक्ता डा.दिनमणि पोखरेललाई सर्वोच्च अदालतको न्यायाधीशमा लगिने भएको छ। सोही कोटामा पदम वैदिकको प्रयास थियो, तर न्यायपरिषद् सदस्य हुँदा बद्नाम भएका कारण परिषद्भित्रैबाट अनुमोदन हुन गाह्रो छ। रमण श्रेष्ठहरू भने डा.दिनमणिको विपक्षमा छन्। गत हप्ता न्यायापरिषद्को बैठक चल्दाचल्दै प्रधानमन्त्रीले शेरबहादुर देउवाकै अगाडि उहाँकै भेगका प्रधानन्यायाधीश विश्वम्भर श्रेष्ठलाई फोन गरेर दिनमणिको नाम टिपाउनुभएको थियो। काँग्रेसले भने सुनिल पोखरेललाई पाखा लगाएर विजय मिश्रलाई सर्वोच्चमा लाने सम्भावना छ।

## किन...

कित्ताकाट गर्नुपर्ने भएको हुँदा कानुनमा जुनसुकै कुरा लेखिए पनि देहायको अवस्थामा न्यूनतम ८० वर्गमीटरभन्दा कम नहुनेगरी जग्गाको कित्ताकाट गर्न सकिनेछ।' यसरी भदौ १२ गते पठाइएको पत्रको जवाफ मालपोत कार्यालयले नापी कार्यालयलाई अझै दिन सकेको छैन। प्रमुख मालपोत अधिकृत ऋषिकुमार दाहालले भूमि व्यवस्था, सहकारी तथा गरिबी निवारण मन्त्रालयको नेपाल राजपत्र भाग ३ मा २०८० साउन ३२ गते प्रकाशित सूचनामा केही अस्पष्टता रहेका कारण जग्गा कारोवार चलायमान हुन नसकेको बताए। स्थानीय तहले गर्न नसकेको जग्गा वर्गीकरणको समय एक वर्षभित्र पुर्‍याएको भए पनि कार्यान्वयन हुनेमा आशंका छ। मालपोत कार्यालयले कस्तो अवस्थामा साढे २ आना जग्गा कित्ताकाट गर्ने, स्पष्ट नभएको बताएको छ। भूमि व्यवस्थापन तथा अभिलेख विभागले १३५ वटै मालपोत कार्यालयलाई भदौ ३ गते कार्यन्वयनका लागि पत्र पठाएको थियो। मालपोतले केही विषयमा द्विविधा रहेको बताएको छ। संशोधित नियमावलीमा स्थानीय तहले निर्धारण गरेको सडक तथा बाटोको मापदण्डका आधारमा स्थानीय तहको सिफारिसबमोजिम त्यस्तो सडकमा पर्ने जग्गा भनी उल्लेख गरिएको छ। 'स्थानीय तहबाट बाटोको मापदण्डसमेत खुलाउन लगाई मापदण्डअनुसारको बाटोमा पर्ने जग्गा मात्र ८० वर्गमीटरभन्दा कम नहुनेगरी कित्ताकाट गर्न मिल्ने हो वा स्थानीय तहबाट सो जग्गा बाटोले छोएको गोरेटो, ४ फिटे वा अन्य भनी सिफारिस प्राप्त भएपछि ८० वर्गमीटर नघट्ने गरी कित्ताकाट गर्न पाउने हो कि होइन ? मालपोत कार्यालय अन्योलमा छ। ८० वर्गमीटर (साढे २ आना) कित्ताकाट गर्नका लागि बाटो चाहिन्छ तर कति फिटको बाटो हुनुपर्छ स्थानीय तहले निर्धारण गर्नुपर्छ। साढे २ आनाभन्दा कमको कित्ता काट गर्न पाइँदैन। २० फिटे बाटोमा कति आना कित्ताकाट गर्न पाउने, १० फिटे बाटोमा कति आना र ५ फिटे बाटोमा कति आनाको कित्ताकाट गर्न दिने स्थानीय तह आफैंले निर्धारण गर्नुपर्नेछ। व्यावसायिक रूपमा परियोजना बनाउनेले सडकको मापदण्डअनुसार साढे २ आनाको कित्ताकाट गर्न पाउनेछन्। अंशबण्डामा पनि साढे २ आनासम्मको कित्ताकाट गर्न पाउने व्यवस्था संशोधित नियमावलीले गरेको छ। तर, अन्यको हकमा द्विविधा भएकाले सर्वसाधारणले जग्गा खरिद बिक्री गर्न सम्भव नभएको नेपाल लेखापढी कानुन व्यवसायी संघ काभ्रेका अध्यक्ष रोशन श्रेष्ठले बताए। श्रेष्ठका अनुसार साढे २ आना जग्गा कित्ताकाट गर्न दिनु व्यावसायिक परियोजनाका आधारमा उपयुक्त हुने भए पनि सर्वसाधारणको हकमा यो नियम स्पष्ट हुन नसक्दा समस्या छ।

## जासुस...

नयाँ 'र' चिफ रवि सिंहको निम्तो मान्न दिल्ली जाने तयारीमा छन्। अचम्म के छ भने, नेपाली गुप्तचरले देशमा राम्रो सूचना संकलन नगर्ने, तर विदेशीलाई नेपालका सूचना साझेदारी गर्ने हतारोमा बाहिरतिर बढी रमाउने क्रम चलेको छ।

## त्यसो...

आधारमा महावाणिज्यदूतसम्मको व्यवस्था छ। त्यसबाहेकका अलग्गै कूटनीतिक संस्था स्थापना गर्ने कुरै छैन। बरु, दूतावासहरूमा विभिन्न नामका सहचारी, कन्सुलर राखेर काम चलाइँदै आएको छ। रोजगारदाता मुलुककै हकमा पनि श्रम मन्त्रालयले उपसचिव दर्जाका लेबर अट्याची (श्रम सहचारी) पठाउने गरेको छ। वाणिज्यदूत राख्नका लागि पनि दूतावास भएकै मुलुक हुनुपर्ने व्यवस्था छ भने अर्को कुनै नाममा दूतहरू राख्न पाइने सुविधा उक्त कन्भेन्सनले दिएको छैन। त्यसैले खोल्नै पर्ने हो भने दूतावास नभएका मुलुकमा सोही नाममा कार्यालय सञ्चालन गर्न मिल्छ। तर, त्यो खर्चिलो हुन्छ। त्यसैले अहिले सानो र सामान्य सेवा दिनसक्ने कार्यालय राख्न सकिने भन्ने चर्चासम्म शुरु भएको छ।

हो, विदेशमा नेपालीको संख्या बढ्दै छ। हजार नेपाली हुँदा दूतावास खोलियो, अहिले लाखभन्दा बढी पुगिसके। जति नेपाली बढे, समस्या, सरोकारका विभिन्न विषय पनि त्यसरी नै बढ्ने भए। सन् १९९०-९५ ताका मध्यपूर्वी (खाडी) मुलुकमा नेपाली श्रमिकको प्रवेश क्रम न्यून थियो। सन् २००० यता तीव्र गतिमा बढ्यो। यो २२ वर्ष बीच नेपालीको जीवनचर्यामा वैदेशिक रोजगारी महत्त्वपूर्ण विषय बन्न पुगेको छ। तर, दूतावास, तिनले दिने सेवा, स्रोत र साधन स्थापनाकालमा जति थियो, त्यति नै छ। कर्मचारी पनि त्यहीअनुसारका छन्। शैक्षिक जनशक्तिको अत्यधिक आप्रवासन गन्तव्यका रूपमा विकास भएको अष्ट्रेलियामा बितेको पाँच वर्ष बीच नेपालीको संख्या सतप्रतिशतभन्दा बढीको दरले वृद्धि भइरहेको छ। तर, त्यहाँको दूतावासमा स्थापनाकालमा जति कर्मचारी, स्रोत र साधन थियो, त्यति मात्रै छ। १५ हजार नेपाली रहेको स्पेन र करिब २ लाख नेपाली रहेको अष्ट्रेलियाको दूतावास उस्तै छ। खासमा नेपाली दूतावासको आवश्यकता स्पेनमा भन्दा पोर्चुगलमा बढी थियो। त्यहाँ २५ हजारभन्दा बढी नेपाली छन्। युरोपेली श्रम गन्तव्यका रूपमा विकसित रोमानियामा २०-२५ हजार पुगिसक्यो। कूटनीतिक सम्बन्धका कारण नेपालीको न्युन उपस्थिति हुँदा पनि अष्ट्रियाको भियनामा दूतावास राखिएको छ।

विदेशमा नेपालीको संख्या वृद्धिसँगै उनीहरूलाई आवश्यक पर्ने कानुनी, सुरक्षा, श्रम, शिक्षा, स्वास्थ्य र विविध समस्या हल गर्ने संयन्त्र दूतावासहरूसँग छैनन्। वाणिज्यदूतहरू त छ्याप्छ्याप्ती छन्। तर, झण्डा हल्लाउनका लागिमात्रै। न ती देशमा व्यापारिक सम्भावनाको खोजी हुन्छ, न त भएका नेपाली व्यवसायीसँग उनीहरूको कुनै किसिमको समन्वय हुने गरेको छ। एउटा देशको झण्डा हल्लाउँदा उक्त देशले गर्ने मानमनितो, सुरक्षा र सहुलियतका लागि वाणिज्यदूत बनाउने चलन छ। भारतसहित अष्ट्रेलिया, बेलायत, जापान, नेदरल्याण्ड, क्यानाडा, जर्मन, अमेरिकाजस्ता मुलुकमा शैक्षिक आप्रवासनको क्रम बढेको छ। तर, कतै पनि शिक्षा सहचारी छैनन्। नेपालबाट वर्षको २९ अर्ब रूपैयाँ विभिन्न देशको शैक्षिक संस्थामा लगानी भइरहेका छन्। त्यहाँ शैक्षिक संस्थासँगको समन्वय वा विद्यार्थीले झेल्ने समस्या समाधान गर्ने संयन्त्र नै छैन।

## नेपालमा...

भएको छ। सुन फुत्केर कहाँ पुग्छ, दसी प्रमाणबिना नै मुद्दा लगेपछि त्यस्तो हुने हो। नेपालमा सुन तस्करी हुने गरेको प्रमाणित भयो। इमरेजेन्सी लाइट, पानी तान्ने मेसिनमा पनि सुन आउने गरेको प्रष्टियो। त्यसो भन्दैमा भन्साराबाट आएजति सबै सामानमा सुन थियो भन्न पनि भएन। फलानो मान्छेले ल्याएको सुन नै हुन्छ भन्दा पनि अदालतमा कसरी मुद्दा स्थापित हुन्छ ? हो, त्रुटी यहीँ छ।

भन्सार र राजस्व अनुसन्धानले फर्मकेन्द्रित अनुसन्धान गर्ने हुन्, व्यक्तिकेन्द्रित हैन। तर, यति गम्भीर मामिलामा फर्मले तिरेको कर ठीक छ कि छैन भन्ने हेरेरमात्रै काम पूरा हुँदैन। कर तिरेको छ भन्दैमा गैरकानुनी आर्जन छ, आपराधिक विधिको आयात छ भने सम्पत्ति शुद्धीकरणअन्तर्गत मुद्दा चल्नुपर्ने हो। नेपालमा २०७० सालयता नव धनाढ्य बढेका छन्। घरजग्गा कारोबार उत्कर्षमा पुग्दा थुप्रै सामान्य मानिसका जीवनस्तर उकासिएको छ। जब त्यसमा मन्दी आयो, त्यसपछि पनि एकथरि मानिसको जीवनचर्या विलासी बन्दै गयो। कसरी ? यसको जवाफ हो, गैरकानुनी आर्जनका अन्य पक्ष हावी हुनु। अर्थात्, यस्तै ब्रेकसुज, विद्युतीय सिगरेट, मलद्वारभित्र राखेर सुन ल्याउनेजस्ता कामले बढावा पाउँदा गैरकानुनी आर्जनको रफ्तार बढ्यो। त्यसलाई नियन्त्रण र अनुसन्धान गर्नुपर्ने निकायमै भ्रष्टिकरण छ। राष्ट्रबैंकले फाइनान्सियल इन्भेटिगेसन युनिट (एफआइयु) बनाएको छ। तर, त्यहाँ कमाऊ धन्दा मौलायो। उसले प्रत्येक व्यक्तिको आर्थिक कारोबारमाथि हरहमेशा निगरानी राख्ने, अस्वाभाविक आर्जनमाथि प्रश्न उठाउने, अनुसन्धान गर्ने काम गर्नुपर्ने हो। तर, त्यही नाममा व्यक्ति वा वित्तीय संस्थाहरूलाई धम्क्याउने, तर्साउने, थर्काउने गर्दै पैसा असुली गर्ने धन्दा विकास भयो। चल्न त सम्पत्ति शुद्धीकरणका मुद्दा पनि चले। तर, त्यसमा परे को ? अति सामान्य आर्थिक हैसियतका वा तन्नम व्यक्तिहरू। कसरी भने, नेपाल-भारतको खुला सिमाना छ। यताबाट ३२ हजार राखेर उता २० हजार झिकियो। भारुको अभाव भयो भनेर कतिपय नेपालीले एक लाखमा पाँच हजार कमाउन थाले। भारतमै भारु जुटाउन गाह्रो भएपछि त्यताका व्यापारीले सीमावर्ती क्षेत्रको नेपाली बैंकमा रकम राख्ने र निकाल्नका लागि भारत पुग्न र एफआइयुले त्यही सूचनालाई अनुसन्धान गरेर सम्पत्ति शुद्धीकरणमा पठाउन थाल्यो। त्यसमा तरकारी, पानीपुरी बेच्ने मान्छेहरू पनि पर्दै गए। अर्थात्, एउटा भारतीय धनाढ्यले नेपाली नागरिकता भएका सोझासीधा मानिसलाई पाँच-दश हजार रुपैयाँ दिएर उसैको नाममा खाता खोल्न लगाउने, पैसा जम्मा गर्ने र भारतमा फर्किएर डेबिट कार्डबाट पैसा निकाल्ने ! फाटेको चप्पल लगाउने, मैलिएको र च्यातिएका लुगा लगाउने मान्छे छ, यसका विरुद्ध करोडौं बिगो दावी गर्दै मुद्दा चलेको छ। बैंकमा खाता खोलिसकेपछि कम्तिमा पाँच-सात करोडको ट्रान्जेक्सन हुने भयो। कारोबारी भारततिरै छ, नेपाली खातावाला जेलतिर ! सुन प्रकरणमा दीपक भुजेल प्रयोग भएजस्तो। दोलखाका २१ वर्षीय उनको नाममा रेडी ट्रेडर्स नामको फर्म दर्ता भयो र त्यही नाममा खाता खोलियो। उक्त फर्मबाट एक अर्बभन्दा बढीको कारोबार भएको छ। तर, स्वयं दीपकलाई यसबारे केही थाहा छैन। अर्कोतिर, नेपाली बजारमा भारु फालाफाल छ। एक सय ५० मा भारु किन्न पाइने हल्ला छ। त्यसमाथि हुण्डीको कानुन छैन। अहिले केही नेपाल ऐन संशोधनमा 'विदेशी विनिमय दुरुपयोग' भन्दै त्यसलाई समेट्न खोजिएको छ। देशभित्रै हुण्डी गर्न पाइँदैन, बाहिर त झन् नपाइने हो। फेरि हुण्डीमा फाइदा पनि छैन। एक अर्बको कारोबार गर्दा ५० लाख कमाई हुन्छ।

## कमरेडहरूमा...

बोलचाल पनि थिएन। द्वन्द्ववादको नियमजस्तो 'शत्रुको शत्रु, मित्र हुन्छ' भन्ने कुरा यसमा लागू हुँदै छ। सुवास भएको भए १० बुँदेवाला विष्णुतिरै हुन्थे। अब विष्णु र ईश्वर एकातिर भएर सुरेन्द्र शंकरतिर हुने सम्भावना देखिन्छ। अर्का '१० बुँदे' भीम रावलसँग विष्णुको राम्रो सम्बन्ध छ। तर, सुरेन्द्र र भीमको नवौं महाधिवेशनबाटै राम्रो छैन। अहिले यही तिक्तताको फाइदा उठाउँदै उनीहरूबीच तानातानको तयारी छ। पद्मा अर्याल विष्णुतिरकी हुन्। भीम आचार्यहरू सुरेन्द्रका भए। च्यासलमा देखिन्छ, विष्णु रिमाल र उनको टोली शंकर पोखरेलको वरिपरि घुमिरहेको। त्यसमा भानुभक्त ढकाल, राजन भट्टराई, राजेन्द्र गौतम, रमेश बडालहरूको साथ छ। प्रदीप ज्ञवालीको कुरा विष्णुसँग मिल्दैन। शंकरले पनि उनलाई मन पराउँदैनन्। त्यसैले उनी कता लाग्लान् भन्ने अनुमान गर्न सकिएको छैन।

अर्कोतिर, एमालेभित्र अहिले अर्थोक हुनुभन्दा प्रदेशको अध्यक्ष हुनु आकर्षक मानिन थालेको छ। पार्टीले हालै सात भौगोलिक प्रदेशका अध्यक्षहरू स्वतः पोलिट्ब्युरो सदस्य हुने व्यवस्था गरेपछि त्यस्तो भएको हो। लुम्बिनीमा केन्द्रीय सदस्य हरि रिजाललाई हराएर राधाकृष्ण कँडेल अध्यक्ष भएपछि उनी प्रदेश अध्यक्षमा मात्रै सिमित हुने भएनन्, राजनीतिक रूपमा केन्द्रीय सदस्य हरिभन्दा माथि, अर्थात् पोलिट्ब्युरो सदस्यको हैसियतका हुने भए। तर, विशेष प्रदेश गैरभौगोलिक भएकै कारण प्रेम पराजुलीलाई पोलिट्ब्युरोमा पारिएन। त्यसैले बागमती प्रदेशमा अहिले अध्यक्ष हुनका लागि गोकुल बाँस्कोटा र महेश बस्नेतहरूको दौडधुप छ। किनभने, प्रदेश अध्यक्ष हुँदाका अधिकार र परिचालनका दृष्टिले पनि प्रभावकारी भूमिका रहन्छ। सबै जिल्लाका अध्यक्ष प्रदेश कमिटीको स्वतः सदस्य हुने भए। स्थानीय तह, पार्टी कमिटी र जनसंगठनका ती-ती तहका निकायसँग सीधै प्रदेश कमिटी जोडिने भयो। त्यसैले अर्थोक छोडेर एमालेका नेताहरू अहिले प्रदेश अध्यक्षतिर केन्द्रित छन् भनिन्छ।

## सिंहदरबारमा...

र सभाका सचिवसम्मलाई निवृत्तिभरण दिन लागिँदैछ। यसबाट प्रतिनिधिसभाका सचिव पदम पाण्डे र राष्ट्रियसभाका सचिव सुरेन्द्र अर्याल पनि लाभान्वित हुँदै छन्। ०६४ को ऐनअनुसार सभाका सचिवहरूको हकमा पेन्सन हुँदैन थियो। त्यस्तै, जागिरको उमेरहद ५८ वर्षलाई संशोधन गर्दै ६२ वर्ष बनाइएको छ। अहिलेको ऐनमा यदि कोही कर्मचारी पेन्सनयोग्य हुन ३-४ वर्ष बाँकी हुँदैमा योग्य भयो भने त्यस्ता कर्मचारीका हकमा पनि पेन्सन दिने व्यवस्था हुने भएको छ। तत्कालका लागि सचिवालयका सचिव डा.रोजनाथ पाण्डे त्यसबाट लाभान्वित हुन्छन्। नत्र, रोजनाथको पहिला शहरी सचिवबाट अवकास हुँदा किशोरजंग थापाकै जस्तो हालत हुन्थ्यो। जागिरबाट सचिवको पदावधी पूरा भई किशोरजंग अवकास भए, तर अवधी नपुग्दा बिनापेन्सन बाँचिरहेका छन्। निजामती सेवामा अवकाशअघि मानार्थ पदोन्नतीको व्यवस्था छैन। तर, सेना, प्रहरीमा अवकाश हुनु एक महिनाअघि एक दर्जाको मानार्थ बढुवा दिने प्रचलन छ। निजामती सेवा ऐनमा भने कोही व्यक्ति असाध्यै रोग लागेमा सात वर्षसम्म थपेर पेन्सन दिने व्यवस्था छ।

अर्कोतिर, निजामती सेवा ऐनअनुसार सहसचिवबाट सचिवमा उक्लिन सिनियर एक्जिक्युटिभ डेभलप प्रोग्राम (एसइडिपी) तालिममा सहभागी हुनुपर्छ। छिटो सचिवमा उक्लिँदा पाँच वर्ष कार्यकाल पूरा गरेर घर जानुपर्ने व्यवस्था छ। पहिला किशोरजंग थापाले जस्तो दीपेन्द्रविक्रम थापा र युवकध्वज जिसीले पदावधी सकिएपछि पेन्सनको लोभ नगरी अवकाश लिए। खुला प्रतिस्पर्धाबाट सहसचिवमा नाम निकालेका दीपेन्द्रले पाँच वर्ष सचिव भएर काम गरे। कृषि सचिवको कार्यकाल बाँकी रहँदै राजीनामा दिई अर्को जागिर खान विदेश गए। युवकध्वजले सचिवमा पाँच वर्षे कालकाल बिताउँदा पनि पेन्सन नपाउने भएपछि उनी पनि देशमा टिकेनन्। कतिपय कर्मचारीको हकमा २० बर्ष पूरा नहुँदा पेन्सन पनि आउँदैन। त्यही कारण हालै सचिवमा बढुवा भएकी लक्ष्मीकुमारी बस्नेत, वीरेन्द्रकुमार यादव, उद्योगकी सहसचिव राधिका अर्याल, ललिता निवास काण्डमा मुछिएर चोखिएका सचिव कृष्णबहादुर राउतहरूले लामो समय तालिम नै लिएनन्। यसरी जवानमै सहसचिव भएर तालिम नलिने र पेन्सन जोगाउने क्रम चलेको छ। कतिपय सहसचिवहरू आफूभन्दा जुनियर सचिव (हाकिम) हुँदा पनि सहेरै जागिर खान्छन्, पेन्सनको लोभले। विभिन्न नामका आरक्षणले गर्दा कतिपय व्यक्ति ३०-३२ वर्षकै उमेरमा सहसचिव हुने भए। त्यस्ता कर्मचारीले १५ वर्ष जागिर खान्छन् र उमेर ४५ वर्ष हुँदा अवकाश पाउँछन्।

## सरकार...

*लगाउने उनै शेखर पुस २६ गते प्रधानमन्त्रीलाई विश्वासको मत दिने निर्णयमा भने सहमत थिएनन्। अहिले सरकार ढाल्न कस्सिएर लागेको छनक उनका सार्वजनिक अभिव्यक्तिमा प्रष्टै देखिन्छ। भनिँदै छ, नेपालको सत्ता राजनीतिमा भारतीय संस्थापनको प्राथमिकता परिवर्तनलाई प्रकटीकरण गर्ने पात्र मात्रै हुन् शेखर। त्यसमा कांग्रेस-एमाले मिल्नुपर्छ भन्ने एमालेका केही नेता पनि जोडिएका छन्। एमाले अध्यक्ष ओली र शेखरलाई नजिक्याएर प्रचण्डको विकल्पमा वातावरण बनाउने दक्षिणको खेल खासगरी सुन तस्करी प्रकरणमा माओवादी नेताहरूको नाम मुछिएपछि शुरु भएको भनिन्छ। संसद्मा सत्तापक्षको बेन्चमा बसेर प्रधानमन्त्रीलाई आतंककारी भन्ने शेखरका खास विश्वासपात्र डा. सुनिल शर्मा 'पिता सरहको मान्छे' भन्दै ओलीको दैलोमा पुग्नु र मीनेन्द्र रिजालको एमाले नेताहरूसँग बाक्लो छलफललाई सरकार ढाल्ने चलखेल ठानेका माओवादी नेताहरूले पछिल्लो परिस्थितिलाई त्यसैको निरन्तरता ठानेका छन्।*

*शेखरले कांग्रेसको नेतृत्वमा सरकार बन्नुपर्छ भने पछि देउवालाई झस्काएको छ। कांग्रेस नेताहरू केपीलाई प्रधानमन्त्री बनाउने गरी भारतले पत्याइरहेको छैन भन्नेमा चाहिँ लगभग ढुक्क छन्। तर, केपीले आफ्ना दूतमार्फत दक्षिण र शेखर दुबैतिर आश्वस्त पारेको अनुमान गरेका उनीहरू सरकार ढल्ने अनि आफू प्रधानमन्त्री पनि नबन्ने अवस्था आउन सक्नेतर्फ देउवा सचेत रहेको बताउँछन्। त्यसकारण पुस १० मा जस्तो कसैको विश्वासमा परेर हचुवामा निर्णय लिने मुडमा देखिँदैनन्। ओली भने प्रष्ट दुई वटा रणनीतिमा अघि बढेका छन्। सत्ता पलट भएर शेखर प्रधानमन्त्री बन्दा माओवादी बाहिर निस्कन्छ, जुन उनले चाहेकै कुरा हो। त्यो सफल नहुँदा पनि कम्तीमा कांग्रेसमा विग्रहको बिउ रोप्न सकिने विश्वास ओलीलाई छ।*

*अर्कोतिर, देउवा, शेखर र गगन पालैपालो सिंगापुर जानु र कम्बोडिया जाने क्रममा ओली पनि त्यता छिर्नुको कारण प्रचण्डप्रतिको असन्तुष्टिले निम्त्याएको नतिजा भनिएको छ। नक्कली भुटानी शरणार्थी काण्डमा बालकृष्ण खाँणलाई समातेर जेल हालेको तर सुन तस्करी प्रकरणमा कृष्णबहादुर महराको नाम आएपछि सरकार ब्याक भएकोमा देउवा असन्तुष्ट छन्। भुटानी शरणार्थी प्रकरण र वाइडबडीमा कांग्रेस र यति, ओम्नी, गिरिबन्धु टि-इस्टेटमा एमालेलाई तर्साएर प्रचण्डले आफ्नो शासन सत्ता लम्ब्याउन खोजेको साझा निश्कर्षमा पुगेका कांग्रेस र एमालेका नेताहरू विकल्प खोज्न नजिकिएको सहज अनुमान गर्न सकिन्छ। अहिले देउवा आफैं सरकारको विकल्पमा अघि बढ्न नसकेको चाहिँ भुटानी प्रकरणमा श्रीमती आरजु समातिने चिन्ताले हो। किनभने नयाँ सरकार बनाउन कम्तीमा १ महिना लाग्छ तर एउटा केशमा बयानको लागि बोलाउन एक घण्टा काफी हुन्छ।*

*यता, नेहरूभन्दा एक कार्यकाल भए पनि बढी प्रधानमन्त्री हुन चाहेका भारतीय प्रधानमन्त्री नरेन्द्र मोदी तेस्रो पटक सत्तामा उक्लिने तयारीमा छन्। पाँच महिनापछि हुने चुनावमा भाजपाले जित्यो भने उनी प्रधानमन्त्रीमा तेहरिनेछन्। त्यो हुँदा दक्षिण एशियाकै राजनीतिमा मोदीको वैचारिक प्रभाव पर्ने निश्चित छ। सुन तस्करी प्रकरणमा पनि यहाँको अनुसन्धान प्रक्रियालाई लिएर भारत सन्तुष्ट छैन। उसको बुझाइ छ - चीन सरकारले संस्थागत रूपमै नेपालको बाटो हुँदै सुन भारत पठाएर बिजेपीलाई कमजोर बनाउन खोज्यो। तर, प्रचण्ड सरकारले सन्तोषजनक ढंगले अनुसन्धान गर्न सकेन। प्रचण्डको विकल्प खोज्नुपर्छ भन्ने आधार त्यसले पनि तय गर्‍यो भनिन्छ।*

*प्रतिनिधिसभा विघटनविरुद्ध एक ठाउँमा उभिएका र त्यसैको जगमा त्यसयता सहकार्य गरिरहेका कांग्रेस र माओवादीबीच फाटो ल्याउने प्रयास सत्ता समीकरण फेरबदलसँग मात्रै सीमित नरहेको विश्लेषण गर्नेहरू पनि छन्। प्रतिगमनका विरुद्ध सँगै सडकमा लडेका शक्तिलाई तितरबितर पार्ने सके चालु राजनीतिक प्रणालीमाथि नै प्रश्न उठ्ने र त्यसले विकल्पमा माहोल बलियो बनाउने दक्षिणको लाइन शेखरहरूले बोकेको भन्नेहरू पनि छन्। महेन्द्र यादवमाथि खुकुरी प्रहार, पूर्वराजा ज्ञानेन्द्रसहित नेताहरूको सिंगापुर भ्रमण, लोकप्रिय कुरा गरेर राजनीतिमा उदाएका शक्ति बलियो भएर आउनु, संसारका उदीयमान सय नेताभित्र एउटा मेयर जो सिंहदरबार जलाइदिने धम्की दिन्छ उसको नाम हालेर हाइलाइट गरिनु अन्ततोगत्वा प्रणालीको विकल्पमा जानका निम्ति वातावरण तयार गर्ने शक्तिकेन्द्रको चासोसँग जोडिएको र शेखरहरूले त्यसैलाई बोकेको कांग्रेसकै संस्थापन खेमाका नेताहरू दाबी गर्छन्।*

## सुवासलाई...

प्रयत्न त ठीक छ। तर अरुले मान्लान् र !' ओलीलाई मनाउन खटिएका थिए- पिएस गुरुङ र शंकर पोखरेल। सुवासलाई प्रधानमन्त्री बनाउँदा पार्टी एकता जोगिने र सरकार पनि नेकपाकै नेतृत्वमा निरन्तर रहने उनीहरूको प्रस्ताव ओलीले स्वीकार गर्नुभएन। त्यसलाई नेतृत्वविरुद्धको षड्यन्त्र भन्दै आइन्दा यस्तो कुरा लिएर आफूकहाँ नआउन चेतावनीसमेत दिएको कुरा पछि छलफलका क्रममा शंकरहरूबाटै खुलासा भयो। ओलीतिर कुरा नमिलेपछि माओवादी र माधवतर्फ छलफल गर्नेहरूले पनि थप प्रयास गरेनन्। अन्ततः अदालतको आदेशले नेकपा औपचारिक रूपमै विभाजित भयो। पछि एमालेको विवादमा पनि सुवासलाई अध्यक्ष बनाएर विभाजन रोक्ने पिएसहरूको प्रयास सम्भव भएन।

पार्टीको आन्तरिक राजनीतिमा आफूलाई साझा नेताका रूपमा विकास गर्ने अवसर सुवास नेम्वाङलाई सधैँ थियो। तर, सधैं ओलीलाई निःशर्त साथ दिँदै आउनुभएका सुवासले प्रतिनिधिसभा विघटन असंवैधानिक हो भनेर खुलस्त भन्न समेत सक्नुभएन। निरन्तर खम्बा बनेर उभिँदा पनि बालकोटको पहिलो रोजाइमा पर्न छाडेका सुवास पछिल्लो समय नेतृत्वको गलत कदमविरुद्ध विस्तारै बोल्न थाल्नुभएको थियो। ओली अध्यक्ष रहेको पार्टीमा 'संसद अवरोध बेठिक हो' भनेर सार्वजनिक मञ्चबाट बोल्नु चानचुने कुरा थिएन, जुन आँट सुवासमा देखिँदै थियो। निधन हुनु केही दिनअघि निकटहरूसँगको कुराकानीमा उहाँले आफू संसदीय फाँटको प्रमुख भए पनि सोअनुसार काम गर्न नपाएको गुनासो गर्नुभएको थियो। अध्यक्षले सोधपुछ नगरी एक्लै निर्णय गर्ने गरेकाले धेरैकुरा आफूलाई पछि मात्रै थाहा हुने उहाँको भनाइ थियो। संसद अवरोधबारे उठेका टिप्पणीमा उहाँ भन्नुहुन्थ्यो, 'मलाई केही पनि थाहा हुँदैन, आफैं निर्णय गर्दिन्छन्।' एमालेका एकजना जनजाति नेतासँगको भेटमा सुवासले आफू दलको उपनेता भएर पनि संसदीय समिति सभापति चयनको विषय मिडियाबाट थाहा पाएको बताउनुभएको थियो। सर्वदलीय बैठकमै सुवासले अध्यक्षको हप्कीदप्की खानु सायद यस्तै मौन विद्रोहको परिणाम थियो।

प्रधानमन्त्रीमा जसले बाटो छेक्यो, राष्ट्रपतिमा पनि सुवासका लागि उही तगारो बनेर उभियो। एमाले र माओवादीबीच सत्ता सहकार्यको सहमति हुँदा राष्ट्रपति एमालेको भागमा परेको थियो। सुवास उम्मेदवार हुने शर्तमा राष्ट्रपति एमालेले पाएको केही माओवादी नेताको आज पनि दावी छ। तर, केपी ओलीले बिष्णु रिमाल, गुरु बराल र डोरमणि पौडेलको नाम पालैपालो अघि सार्नुभयो। नेताको खल्तीको व्यक्ति राष्ट्रपति हुँदा झेल्नुपरेका अप्ठेराले हत्तुहैरान भैसकेका माओवादी अध्यक्ष प्रचण्डका लागि ती नाम स्वीकार्य भएन। परिणामतः माओवादी र एमालेको सहकार्य टुट्यो। पछि कसैले पनि भोट हाल्दैनन् भन्ने अवस्थामा मात्र सुवासलाई उम्मेदवार बनाइयो। त्यसताका शुभचिन्तकहरूलाई सुवास सुनाउनुहुन्थ्यो, 'हारिन्छ भन्ने पक्का भएपछि मैले टिकट पाएको हो, जितिने अवस्थामा मैले पाउँदैनथें।'

घनश्याम भुसालले त ०७४ सालमै सुवासलाई राष्ट्रपति बनाउन स्थायी समिति बैठकमा प्रस्ताव गरेका थिए। तर, ओलीले विद्या भण्डारीको पक्षमा निर्णय गर्नुभयो। राजनीतिमा महिला सहभागिता राम्रै छ, यसपटक लिम्बुवानबाट गरौं भन्ने तर्क थियो घनश्यामको। विद्यासमेत सहभागी बैठकमा त्यो प्रस्ताव कसैले सुनेन।

सुवासले लिएको राजनीतिक बाटोमा आ-आफ्ना सहमति-विमति हुनसक्छ। तर, अरुलाई गालीगलौज गर्नु नै राजनीति हो भन्ने भाष्य बनिरहेको आजको सन्दर्भमा उहाँको नम्रता, शिष्टता र भद्रता अनुकरणीय छ। बाँचुञ्जेल वास्ता नगर्ने तर, मृत्युपछि अति प्रशंसा गर्ने कतिपयले सुवासलाई भगवान नै बनाइरहेका छन्। वास्तवमा सुवास एक असल मान्छे हुनुहुन्थ्यो, संगसंगै असल नेता पनि। त्यसकारण अति प्रशंसामा रमाउनुभन्दा उहाँले देखाएको बाटोमा हिँड्ने प्रतिज्ञा गर्नु पो सुवासप्रतिको सम्मान हुने होला नि, हैन र ?